ज्यो.पं.प्राणनाथत्रिपाठिशर्मणा संस्थापितम्



श्री पद्मनाभ २०४७

भूनागाभ्रनेत्र २०८१ मितविक्रमाब्दस्य नेपालदेशीयम्

नेपालपञ्चाङ्गनिर्णायकविकाससमितिनिर्णीतगणितव्रतपर्वादिसहितम्

# हिमाल-पञ्चाङ्गम्

राजा-भौमः मन्त्री-शनिः

## वि.सं. २०८१

**पञ्चाङ्गकर्ता-**

पं.प्राणनाथतनुज पद्मनाभत्रिपाठि
सि.ज्यो.आचार्य पोखरा अर्घौं
पोखरा म.न.पा.-२६ बुढीबजार,
कास्की, गण्डकी प्रदेश, नेपाल
का.म.न.पा.-३२, कोटेश्वर
काठमाण्डौं, नेपाल

**सहयोगी-**

प्रियदर्शिनी त्रिपाठी, प्रत्युषनाथ त्रिपाठी

**श्रद्धापुष्पम्**

शास्त्रज्ञेन पितामहेन शिवदं पञ्चाङ्गसंस्थापितं
स्वर्याते तदनु प्रचालितमथो श्रीपद्मनाभेन तत् ।
ताते तेऽपि दिवङ्गतेऽद्य चरणे नत्वा.तयोः सन्ततिः
श्रद्धापुष्पसमर्पणं प्रकुरुते श्रीविश्वनाथाभिधः ॥

**श्रीपद्मनाभतनुजः**

डा.विश्वनाथत्रिपाठिफलितसिद्धान्त
ज्योतिषाचार्येण सम्पादितम् ।
डा.सन्तोषत्रिपाठिशर्मणा प्रकाशितम् ।

श्रीशालिवाहनीयशकः १९४६
ईसवीय सन् २०२४-२५
कालयुक्तनामसंवत्सरः ५२
श्रीनेपालसंवत् ११४४-४५
सृष्टितोगताब्दाः १९५५८८५१२५
कलेर्गताब्दाः ५१२५
पञ्चाङ्गस्थापिताब्दाः ७१



पोखरा म.न.पा.-२८,अर्घौंकालिकास्थान निवासी स्व.पं.प्राणनाथ-तनुज-पं.पद्मनाभत्रिपाठिशर्मणा विरचितम्

सूचना: पञ्चाङ्ग खरिदगर्दा यसमा टाँसिएको सरस्वतीको चित्र भएको बहुरङ्गी होलोग्राम स्टिकर अवश्य हेर्नुहोला ।

मूल्य रू. १२०/-



हिमाल पञ्चाङ्ग संस्थापक :
स्व. पं. प्राणनाथ त्रिपाठी



हिमाल पञ्चाङ्ग सम्वर्धक :
स्व. पं. पद्मनाभ त्रिपाठी

## नम्र निवेदन-

विभिन्न शुभचिन्तक-हितैषीवर्गहरूको सुझाव र पाठकहरूको आकांक्षा-आवश्यकताअनुरूप परिमार्जन गरी वि.सं. २०८१ सालको हिमाल पञ्चाङ्ग (श्री प्राणनाथको पात्रो) विज्ञजन समक्ष प्रस्तुत गरिएको छ। विधिका विधानअनुसार सं.२०८० भाद्र १ गते (श्रावणशुक्ल द्वितीया) यस पञ्चाङ्गका सम्वर्धक, ज्योतिषशास्त्रका अनन्यसाधक हाम्रा पिता **पं. श्री पद्मनाभ त्रिपाठीको** असामयिक निधन हुनाले हाम्रो परिवार अत्यन्त मर्माहत छ तथापि संसारको नियमअनुसार सांसारिकताको निर्वहन गर्नुपर्ने नै छ । आफ्ना पिता-पितामहद्वारा स्थापित विद्याविलासको सद्मार्ग तथा पितृचरणद्वारा निर्दिष्ट कर्त्तव्यपथमा अविचलित भई ज्योतिषशास्त्र, देश र समाजको सेवा गर्न दृढसंकल्पित छौं । वहाँको शिवसायुज्यप्राप्तिले ज्योतिषजगत्मा हुन पुगेको क्षति अपूरणीय भएता पनि वहाँको सद्कीर्ति किञ्चित पनि धूमिल हुन नदिने प्रतिवद्धता व्यक्त गर्दछौं साथै यस साधनामा पञ्चाङ्गका समस्त पाठक, शुभचिन्तक हितैषीजन, सम्बन्धित निकाय तथा समस्त बन्धुबान्धवहरूबाट पूर्ववत् सद्भाव र सहयोगको अपेक्षा पनि निवेदन गर्न चाहन्छौं । **यसवर्षको पूरा पञ्चाङ्ग पूज्यपिताजीबाट नै गणना भई सकेको हुनाले पञ्चाङ्गकार वहाँ नै हुनुभएको पनि निवेदित छ।**

पञ्चाङ्गमा समावेश गरिएका विषयवस्तुहरू समयसापेक्ष परिमार्जित छन्,पात्रोमा रहेका सामग्री हेतु विषयसूची हेर्नुहुन अनुरोध छ। पञ्चाङ्गमा घटी पलका साथै यथावश्यक घण्टा मिनट(वजेमा) पनि राखिएको छ, यसमा लेखिएको समय रात्रि १बजेबाट दिनको १२ बजेसम्म १,२,३,...१२ तथा दिनको १बजेबाट रात्रि ११ बजेसम्म १३,१४,..२३ र रात्रि १२बजेलाई ० बजेले सङ्केत गरिएको छ । यहाँ राखिएको सूर्योदय नेपालको प्रामाणिक( हातेघडी) समय हो यसमा बेलान्तर र देशान्तर संस्कार भईसकेकोले उक्त सू.उ.प्रयोग गरी इष्टकाल बनाउँदा बेलान्तर संस्कार गर्नुपर्दैन देशान्तर र चरान्तर संस्कार मात्र गर्नुपर्छ। पात्रोमा सबैपर्वहरू सम्बन्धित दिनमा नै राख्न स्थान नपुग्ने हुनाले बाँकी रहेका पर्वहरूलाई ⓿❶❷ आदि चिन्हहरूद्वारा संकेत गरी त्यसै पृष्ठमा नै राखिएको हुन्छ यसै अनुरूप पढ्नुहुन अनुरोध गर्दै समस्त पाठकवर्गमा नववर्ष २०८१ को मंगलकामना व्यक्त गर्दछौं। हिमाल पञ्चाङ्ग परिवार

## श्री संवत् २०८१ सालको वर्षव्यवस्था

यस सालमा कालयुक्तनामक संवत्सर र दशाधिकारी ग्रहहरूमा राजापदमा मङ्गल, मन्त्रीपदमा शनि, सस्येशपदमा मङ्गल, रसेशपदमा गुरु, नीरसेशपदमा मङ्गल, मेघेशपदमा शनि, धान्येशपदमा चन्द्र, फलेशपदमा शुक्र, धनेशपदमा मङ्गल, दुर्गेशपदमा शनि रही ग्रहपरिषद् गठित भएर वर्षारम्भ भएको छ। आ-आफ्नो कार्यभार सुसम्पन्न गर्न सबै ग्रह कटिबद्ध एवं प्रयत्नशील रहने छन् । ग्रह परिषद्मा ७० प्रतिशत क्रुरग्रह र ३० प्रतिशत शुभग्रहको सहभागिता रहेको छ । कालयुक्तनामक संवत्सर र शुभाशुभग्रहको विवेचन गर्दा यसवर्षको जागतिक परिस्थिति मध्यममात्र नै देखिन्छ, राजा मङ्गल र मन्त्री शनिमा आपसी शत्रुताको सम्बन्धले गर्दा शासकीयकार्यमा बाधाविरोध र नकारात्मकताको स्थिति रहने छ, सुधारात्मक मार्गमा अवरोधको अनुभूति होला । वर्षको आरम्भ धनु लग्नमा भएको छ समग्रमा जगल्लग्न लग्नेश र अन्य दशाधिकारी ग्रहहरूको माध्यमबाट यस वर्षमा निम्नानुसार शुभाशुभ फल प्राप्त हुनेछ।

लग्नेश गुरु सूर्यका साथमा पञ्चमस्थानमा रहेको छ यसले देशको सकल घरेलु उत्पादनमा केही वृद्धि अवश्य रहला, गुरु रसेश पनि हो अतः रसयुक्तवस्तुमा उत्साहजनक स्थिति रहला । पराक्रमभावको स्वगृही शनि क्रूर नै भएपनि राज्यकार्यमा सफल सिद्ध होला । नवमेश सूर्य पञ्चमभावमा स्वउच्च तथा पञ्चमस्थानमा वृहस्पति रहेको हुनाले शिक्षा र धार्मिकक्षेत्रमा राम्रै हुने विश्वास गर्नसकिन्छ, धार्मिक क्षेत्रमा जागरुकता बढ्ने देखिन्छ। धान्येश चन्द्रमा हुनाले कृषिक्षेत्र मध्यम हुनेछ, मेघेश पदको शनिले वर्षामा कमी ल्याउला। दुध र दुग्धजन्य पदार्थ, वनस्पति, रसवस्तु, फलफूल, सागसब्जी आदिमा सामान्यतः समता नै रहला। यस वर्ष कृषि उपज तथा वैदेशिक विप्रेषण विगतका तुलनामा केही कम हुन जाला । कृषक तथा श्रमिक वर्गलाई सामान्य तथा व्यापारी, कर्मचारी, शिल्पकार आदि वर्ग भने प्रायः सन्तोषित रहने देखिन्छ। वर्षको उत्तरार्ध पूवार्द्ध भन्दा बढी राम्रो रहला।

॥ अथ जगल्लग्नचक्रम् ॥




| जगल्लग्नम् (८।८।२८।११) जन्मलग्नक्षंतः फलम् | | |
|---|---|---|
| मेष | ९ | धर्मार्थप्राप्तिः |
| वृष | ८ | कष्टम् |
| मिथुन | ७ | स्त्रीसुखम् |
| कर्कट | ६ | अरिपराजयः |
| सिंह | ५ | पुत्रसुखम् |
| कन्या | ४ | मित्रसुखम् |
| तुला | ३ | कुटुम्ववृद्धिः |
| वृश्चिक | २ | धनलाभः |
| धनु | १ | देहसुखम् |
| मकर | १२ | दुःखदारिद्रचयम् |
| कुम्भ | ११ | लाभः |
| मीन | १० | सुखम् |

## विषयसूची


| क्र. | विषय | पृष्ठ |
|---|---|---|
| १. | सर्वार्थसिद्धि, मास-राशिफल | ४-८ |
| २. | होडाचक्र, गुणचक्र | ९-११ |
| ३. | प्रथम तथा दशम लग्न सारिणी | १२-१३ |
| ४. | विभिन्न जिल्लामा हुने समयान्तर | १४ |
| ५. | सप्तवर्ग साधन विधि | १५ |
| ६. | चर सारिणी | १६-१७ |
| ७. | विंशोत्तरी, त्रिभागी, योगिनी दशा-अन्तर्दशा चक्र | १८ |
| ८. | ग्रहमैत्रादि विविध चक्र | १९ |
| ९. | संवत्सरफल, आयव्यय, मेष-तुला-विषुवत्चक्र | २० |
| १०. | विवाह, व्रतबन्ध आदि विविध साइतहरू | २१-२२ |
| ११. | ग्रहका मन्त्र, दान, जप तथा विभिन्न चक्रहरू | २३-२४ |
| १२. | बारवेला तथा अन्य विषयहरू | २५ |
| १३. | शिववास, अग्निवास सारिणी, ग्रहमुखचक्र आदि | २६ |
| १४. | पञ्चाङ्ग पक्ष तथा मासका विविधटिप्पणी | २७-५२ |
| १५. | दैनिकलग्न तथा ग्रहस्पष्ट सारिणी | ५३-६४ |
| १६. | संक्रान्तिफल | ६५-६७ |
| १७. | षड्वर्गशोधन, वृषवास्तु, कलशादि विभिन्न चक्रहरू | ६८ |
| १८. | द्वादशभावस्थ ग्रहफल, घातचक्रादि, विभिन्न चक्रहरू | ६९ |
| १९. | जन्मोत्सव पूजा तथा विविध सामग्री | ७० |
| २०. | विभिन्न मुहूर्तहरू | ७१-७३ |


**सूचना - संवत् २०८१ मा नेपालबाट कुनै पनि ग्रहण दृश्य छैनन् ।**

### नेपाल पञ्चाङ्ग निर्णायक विकास समितिको सूचना

पञ्चाङ्गमा समावेश भएका विषयवस्तु मध्ये पञ्चाङ्गका घ.प./घ.मि., चाडपर्वहरू, विवाह-व्रतवंधआदि मुहुर्तहरू संक्रान्तिफल, आयव्यय, विषुवत्फल, जगल्लग्नफल, वर-वधुमेलापकसारिणी, प्रथम-दशम लग्नसारिणी, साप्ताहिक ग्रहस्पष्ट, दैनिक लग्न सारिणी, दैनिक ग्रहस्पष्ट, उदयास्त, पादचार, पापांश, पार्श्व, अग्नि रूद्राजुर्ने दिन, गृहारम्भ, गृहप्रवेश, अन्नप्राशन, दोकान खोल्ने, न्वागी खाने, मुर्दालिने मुहुर्त, सर्वार्थसिद्धियोग, होडाचक्र, संस्कृत वर्षफल, विंशोपका र ग्रहण, समितिमा छलफलभई निर्णय भएका विषय हुन्। यो बाहेक अन्य विषयवस्तुहरू समितिमा निर्णय नभएका चाडपर्वहरू र छपाइमा फरक परेमा पञ्चाङ्गकार स्वयं जिम्मेवार हुनुहुनेछ। पञ्चाङ्गमा उल्लेखित चाडपर्वहरू शास्त्र र परम्पराका आधारमा निर्णय भएका हुन् । यस भन्दा फरक दिन मनाउने परम्परा भएका व्यक्ति वा समुदायले आफ्नो परम्पराअनुसार चाडपर्व मनाउन सक्नेछन् ।

यस नेपाल पञ्चाङ्ग निर्णायक विकास समितिको गठन आदेश २०७७ को दफा ७ को उपदफा (ज) र (ट) अनुसार समितिको स्वीकृति विना पञ्चाङ्ग तथा क्यालेण्डर (भित्तेपात्रो) प्रकाशन गर्न नपाइने भएको हुँदा प्रकाशन गर्नचाहने व्यक्ति वा संस्थाहरूले **नेपाल पञ्चाङ्ग निर्णायक विकास समितिबाट स्वीकृति** लिएरमात्र प्रकाशन गर्नुहोला। अन्यथा आवश्यक कार्यवाही हुने व्यहोरा सम्बन्धित सबैमा जानकारी गराइन्छ।

नेपाल सरकार
संस्कृति, पर्यटन तथा नागरिक उड्डयन मन्त्रालय
**नेपाल पञ्चाङ्ग निर्णायक विकास समिति**

प. सं. ०८०/८१
च.नं. ४४

मिति : २०८०/९/१९

## स्वीकृति र शुभकामना

नेपाली संस्कृति, परम्परा, चाडपर्व, व्रत, उत्सव, यात्रा, संस्कार आदि समस्त धार्मिक एवं सामाजिक कृत्यको धार्मिक कार्यतालिकाको मूल स्वरूप पञ्चाङ्ग(पात्रो) हो । पञ्चाङ्गमा समावेश गरिने धार्मिक एवं सामाजिक कृत्यहरूको मूल आधार भने पञ्चाङ्ग ग्रहहरूको स्पष्ट, उदय, अस्त बक्री र मार्गी आदि हुन् । पञ्चाङ्गमा समावेश गरिने यी विषयहरु ग्रहगणितद्वारा निर्धारण गरिन्छन् । यसरी निर्धारण गरिएको तिथि नक्षत्रादिको आधारमा श्रुति, स्मृति, पुराण, तन्त्र, धर्मशास्त्र, देशाचार, कुलाचार र विभिन्न सम्प्रदायको आ-आफ्नै परम्पराको आधारमा व्रत पर्व उत्सव आदिको तिथि मिति निर्धारण गरिन्छ।

उक्त सन्दर्भमा अनुभवी एवं दक्ष गणकहरूद्वारा ग्रह गणितका मूल सिद्धान्तका आधारमा छुट्टा छुट्टै गणना गरिएको ग्रहस्थिति, पञ्चाङ्ग र ग्रहण आदिमा एकरूपता कायम गरी तयार गरिएको पञ्चाङ्गका आधारमा आमन्त्रित धर्मशास्त्रका विशिष्ट विद्वान् फलित ज्योतिष विशेषज्ञ, श्रुति स्मृति र नेपाली परम्पराको यथार्थ ज्ञान गर्नुहुने शास्त्रज्ञ र विभिन्न संप्रदाय विशेषज्ञ विशिष्ट विद्वान्हरूको राय सुझावअनुसार तयार गरिएको वि.सं. २०८१ सालको पञ्चाङ्ग प्रकाशन गर्न **हिमाल पञ्चाङ्गका पञ्चाङ्गकार डा. विश्वनाथ त्रिपाठीलाई** प्रकाशनार्थ स्वीकृति प्रदान गरिएको छ। यो पञ्चाङ्ग निर्माण गर्ने सत्कार्यमा सहभागी हुने विद्वान्हरूमा आमन्त्रित ज्योतिर्विद् एवं धर्मशास्त्र विशेषज्ञ विद्वान्हरूका अतिरिक्त समितिका अध्यक्ष प्रा.श्रीकृष्ण अधिकारी, सदस्यहरूमा प्रा.डा. देवमणि भट्टराई, डा. वासुदेव कृष्ण शास्त्री (कोइराला), सहप्रा.तनुजा दाहाल, संस्कृति, पर्यटन तथा नागरिक उड्डयन मन्त्रालयका प्रतिनिधि उपसचिव श्री शिवराज रेग्मी र सदस्य सचिव एवं कार्यकारी निर्देशक ज्यो.पं. सूर्यप्रसाद ढुङ्गेल हुनुहुन्छ ।यस्तै गरी पञ्चाङ्ग गणना गर्ने र तयार गर्ने पञ्चाङ्गकारहरू मध्ये- ज्यो. सूर्यनाथ पन्त, ज्यो.पं. विश्वराम शर्मा सापकोटा, श्री मुरारिराज पाण्डे, डा. विश्वनाथ त्रिपाठी, ज्यो. डिल्लीराज जोशी, ज्यो.पं. दिव्यपुरुष ढकाल, ज्यो. सुबोध ढुङ्गेल, डा. लोकराज पौडेल, ज्यो. शशिधर जोशी, ज्यो. दामोदर जोशी, श्रीकेश कौशिक, दैवज्ञ कीर्तिकिरण जोशी, दैवज्ञ सिद्धिलक्ष्मी व्यञ्जनकार, ज्यो.पं. चेतराज उपाध्याय र श्री नारायणप्रसाद नेपाल हुनुहुन्छ।

नेपाल पञ्चाङ्ग निर्णायक विकास समितिद्वारा स्वीकृत पात्रो प्रयोग गर्न समस्त पाठक वर्गमा हार्दिक अनुरोध गरिन्छ। समितिद्वारा स्वीकृति प्राप्त नगरेका पात्रोहरूमा उल्लिखित तिथि नक्षत्र चाडपर्व आदिका विषयमा यो समिति जवाफदेही हुने छैन । नेपाल पञ्चाङ्ग निर्णायक विकास समितिद्वारा निर्देशित तथा स्वीकृति प्राप्त पञ्चाङ्गलाई अझ बढी शास्त्रीय र मर्यादित बनाउन सकारात्मक सुझावको लागि समस्त विद्वज्जनमा हार्दिक अनुरोध गरिन्छ। अन्त्यमा वि.सं. २०८१ सालको नव वर्षारम्भको शुभोपलक्ष्यमा देश विदेशमा रहनुहुने समस्त नेपाली दाजुभाइ दिदी बहिनीहरूमा यो समिति हार्दिक मङ्गलमय शुभकामना व्यक्त गर्दछ।

श्रीकृष्ण अधिकारी
प्रा. श्रीकृष्ण अधिकारी
(अध्यक्ष)


फोन : ०१-४५११०९३ E-mail : info@npns.gov.np. / npns2025@gmail.com / www.npns.gov.np


## हार्दिक समवेदना



नेपाल पञ्चाङ्ग निर्णायक विकास समितिका सदस्य, हिमाल पञ्चाङ्गका पञ्चाङ्गकार एवं ज्योतिषशास्त्रका मर्मज्ञ विद्वान् ज्यो. पं. पद्मनाभ त्रिपाठीको गत सं. २०८० भाद्र १ गतेका दिन ७५ वर्षको उमेरमा असामयिक निधन भएकोले दिवंगत आत्माको चीरशान्ति तथा शिव-सायुज्यको लागि श्री पशुपतिनाथसँग प्रार्थना गर्दछौं।

नेपाल पञ्चाङ्ग निर्णायक
विकास समिति
तथा
पञ्चाङ्ग परिवार

# वि०सं० २०८१सालको मासिक भविष्यफल

**वैशाख**:यस मासमा ग्रहगोचर साधारणतया मध्यममात्र नै छन्। शनिबारको संक्रान्ति तथा बुधबारको औंशीले अन्नादि खाद्यपदार्थ र सागसब्जी लगायत दैनिक उपभोग्य वस्तुमा अभाव तथा मूल्यवृद्धिको संकेत गर्दछ।देशको वस्तुस्थितिमा भने केही सकारात्मक संकेत छाउला। मेषको सूर्यले कपास, सुन,तामा,चाँदी, तेल, लौहधातु, सूतीवस्त्र तथा अन्य सेतावस्तुहरू महँगो गराउनेछ। कुम्भराशिको शनि आय स्थानमा रहनाले आन्तरिक आयआर्जनमा केही वृद्धि गराउने देखिन्छ।केही नवीन कार्यारम्भ पनि हुन सक्ला।१३,१६,१८,२१,२४,२५र २८गते मेघबादल योग देखिन्छ।

**मासको दान**: सातु जल(शर्बत आदि), पंखा, छाता, धर्मघट,उपानह (जुत्ता,चप्पल)आदिको दान,विश्रामस्थलको निर्माण उचित छ।

**ज्येष्ठ**: यस मासको जागतिक परिस्थितिले सामान्यतः उत्तमताको आभास गराएको छ।मंगलबारको संक्रान्ति छ तर बिहीबारको औंसीले गर्दा सामान्य जनमानसलाई केही सहजताको अनुभूति होला र बजारभाउमा पनि केही समता आउला। वृषराशिका सूर्यले जौ,चना,गुड, घृत, तिल, वेल,आलसी, सुत,सन आदि वस्तुमा तेजी रहला, गँहू र चामलमा मंदी होला । मासकुण्डलीमा दशमभावको स्वगृही शनि राज्यव्यवस्थामा प्रबल र निर्णायक होला,केही सकारात्मक वातावरणको आभास गराउला । वायु बतासको प्रकोप तथा वर्षामा कमीको आभास भए पनि महिनाको पहिलो तथा अन्तिम सप्ताहमा मेघबादल-जलवर्षणको योग छ।

**मासको दान**: दही-भात,साथै गर्मी याममा हितकरवस्तुहरू पंखा,छाता,आदिको दान,वरपिपलको चौतारी निर्माण, पिपलमा जलार्पणले वंशवृद्धि हुन्छ भन्ने मान्यता छ।

**आषाढ**:यस मासका ग्रहस्थिति मध्यमजस्ता छन्। शनिबार -को सूर्यसंक्रान्ति तथा शुक्रबारको औंसीले दैनिक उपायोगी वस्तुहरूमा केही सहजता तर केही खाद्यवस्तु तथा डिजलआदि खनिज ईंधनमा मूल्यवृद्धि होला। आर्थिकवर्षको समाप्तिमा बजेट सक्न गरिने केही विकासका कार्यले थोरै भए पनि जनता लाभान्वित हुने छन्।आद्राको सूर्यले रूई,सूत,कपास,चीनी,तेल,धान्य, तामा,चाँदी आदि पदार्थमा तेजी,सुन सामान्य रहला। सेयरबजारमा तेजी रहला। कृत्रिम अभावले गर्दा दैनिक उपभोग्य पदार्थ तथा प्राकृतिक इन्धन आपूर्त्तिमा समस्या देखिएला।वर्षा विषमता भए तापनि १,३,७,८,१०-१३,२२,,२७,३१ गते जलवर्षणको योग छ।

**मासको दान**: अमलाको मुरब्बा वा अमला,कपूर र चन्दन, पुस्तक,साथै गर्मी याममा हितकर वस्तुहरूको दान गर्नु शुभ छ।

**श्रावण**: यस मासमा ग्रहस्थिति साधारणतया मध्यमं मात्र देखिएका छन्।मंगलबारको संक्रान्ति तथा आइतबारको औंसीको योग त्यत्ति राम्रो छैन । वर्षा विषमता र रोगव्याधको प्रकोपले सामान्य जनजीवन प्रभावित हुन सक्ला।रसवस्तुमा कीट प्रकोप हुनाले मूल्यवृद्धि हुनजाला । गुड,बाजरा, सुठो, नरीवल, सुन, चाँदी आदिको मूल्य कम हुने रूई, सूतीकपडा, खाद्यान्न, खाद्यतेल, इंधन आदिमा तेजी रहने छ, सेयरबजार मा अत्यधिक उचारचढाव रहला। वर्षेबाली सामान्यतः राम्रो र हुनेछ। वृष्टिविषमताको आभास भए पनि पहिलो सप्ताह मन्द झरी,१५,१७,२२,२५,२७ गते मध्यम जलवर्षण योग छ।

**मासको दान**: यस मासमा खीरदानको विशेष महत्व छ। वस्त्र,घृत,दूध,वनौषधि,रत्न,यज्ञोपवित आदिको दान,विश्रामस्थलको निर्माण,ब्राम्हणलाई पायसको भोजनले वंशवृद्धि हुन्छ।

**भाद्र**: मासको अवस्था सर्वसाधारणका लागि सामान्यतः मध्यम जस्तो मात्र नै छ। शनिबारको संक्रान्ति र मंगलबार को औंशीले सामान्य जनमानसमा भय त्रास र उद्विग्नताको वातावरण ल्याउने देखिन्छ। शासनको क्रूरताले सामान्य जनता पिडित हुनसक्नेछन्।विद्यार्थीवर्गलाई भने यो महिना राम्रै होला। सिंह राशिका सूर्यले मुद्रा विनिमय र सुवर्णमा घटाबढी हुनेछ, सेयरबजारमा केही उत्साहजनक स्थिति रहला। शासनतन्त्रको प्रश्रयले केही तस्कर र कालोबजारिया भने प्रसन्न रहने देखिन्छ। देशको पश्चिमी क्षेत्रमा कुनै रोगव्याध वा कुनै ठुलो यानदुर्घटना वा केहीसंकटको स्थिति हुने देखिन्छ।वृष्टिविषमताको आभास भए पनि पहिलो र तेस्रो सप्ताहमा मध्यम वर्षा होला।

**मासको दान**: यस मासमा खीर, मह, साँवा, दूध, शख्खर आदिको दान गर्नु उचित छ।

**आश्विन**: यस मासमा ग्रहस्थिति सामान्यतया मध्यमजस्ता छन्। बुधबारको औंशी, मंगलबारको सूर्यसंक्रान्ति तथा पाँचवटा मंगलवारको योग पर्नाले यो मास सामान्यतया अनिष्टकारक छ।सामान्य जनमानसमा आकस्मिक रोगव्याधको प्रकोप हुन जाला ।खाद्यान्नमा अप्रत्याशित मूल्यवृद्धि,वर्षा विषमताले वर्षेबालीमा हानिको सम्भावना,व्यापारविषमता आदिले गर्दा सामान्यवर्गमा त्रासको वातावरण छाउला। वर्षा जनित विप्लवले जन-धनको हानि पनि सम्भव देखिन्छ । सुन-चाँदी, चीनी, मसला, घिउ, खाद्यान्न, तील, खाद्यतेल, आदि मँहगा हुने छन् । शेयरबजार मन्द रहला। वैदेशिक विप्रेषणको तुलनात्मक रूपमा वृद्धि हुनेछ।

**मासको दान**: यस मासमा तिल,घृत,मह,औषधि, पितृनिमित्तक कर्म, ब्राम्हण-ब्राम्हणी भोजन, सिधा दान गर्नु उचित छ।

# वि०सं० २०८१ सालको मासिक भविष्यफल

**कार्त्तिक:** मासमा ग्रहस्थिति सामान्यतया राम्रो नै देखिन्छ। बिहीबारको संक्रान्ति र शुक्रबारको औंशी परेको छ यसले सामान्यतया खाद्यान्न र दैनिक उपयोगका वस्तुहरुको आपूर्ति र मूल्यमा केही सहजता ल्याई सामान्यजनमा सन्तोष देला, दुध र दुग्धजन्य पदार्थको उत्पादन पनि बढ्ला । सूर्य तुला राशिको भएकाले शासनतन्त्र शिथिल रहला। शेयरबजारमा तेजीको वातावरणले केही उत्साहजनक स्थिति देखिन्छ। धान्यादि वर्षेवालीमा तुलनात्मक रुपमा राम्रो प्रतिफल पाएको हुनाले कृषकवर्ग खुसी हुने देखिन्छ।वैदेशिक विप्रेषणमा केही वृद्धि होला।प्रथम सप्ताह र मासान्ततिर मेघबादल दृष्टिगत हुन सक्ने देखिन्छ।

**मासको दान:** मासानां कार्त्तिक:श्रेष्ठ:,यो मास विशेष दीपदानका लागि प्रसिद्ध छ।नित्य चना दान,गाईको सेवा,संध्याकालमा आकाशदीप दान आदि गर्नालि नरक दर्शन हुँदैन भन्ने मान्यता छ।

**मार्गशीर्ष:** मासका ग्रहस्थिति सामान्यत: मध्यममात्र छन्, शनिबारको संक्रान्ति र आइतबारको औंसीको योग साथै पाँच शनिबार त्यत्ति राम्रो छैन यसले कुनै विग्रह वा उत्पातको संकेत गर्दछ।शैक्षिकसंस्थाहरुमा वितण्डा मच्चिएला। राजकीय आयमा वृद्धि होला,तर शासनको क्रूरताले जनतामा त्रासको स्थिति रहला, स्वाथ्यको क्षेत्रमा सुधारात्मक स्थितिको सिर्जना,आर्थिकक्षेत्रमा केही उतार-चढाव हुनेछ।कपास, सुतीकपडा,जौ,चना,चामल आदि तथा सुनचाँदी आदिमा पनि समता आउला तर खाद्यतेल, चीनी-शख्खर तथा दाल भने केही महँगा हुन जालान्। शीतकालको आभास होला,सामान्यतया आकाश सफा रहला मासको दोस्रो सप्ताहमा कतै सामान्य झरी पर्ला।

**मासको दान:** यस मासमा गूँड, नून, कपास,सुतीवस्त्र,दूध, शख्खर आदिको दान गर्नु उचित छ।

**पौष:** मासको जागतिक परिस्थिति सामान्यतया सन्तोषजनक नै रहला। सोमबारको सूर्य-संक्रमण र सोमबारको नै औंशीले सामान्य जनजीवनको शान्ति र सुव्यवस्थातर्फ संकेत गर्दछ।मूलका सूर्यले सून,चाँदी,मणिमाणिक्य, सुगन्धित तेल, रुई, सूतीवस्त्र आदि केही महँगा हुन सक्ने छन् । मुद्राविनिमयमा घटाबढीले वैदेशिक व्यापार र विप्रेषणमा केही असर पुग्ला। महिनाको पहिलो सप्ताह शेयरबजारमा तेजी आएर मासको मध्यभागमा बिक्रीको चाप हुनाले केही घट्न जाला ।देशको पश्चिमोत्तर क्षेत्रमा केही असामान्य घटना हुन जाला।शैक्षिकक्षेत्रमा विषमस्थिति नै रहने देखिन्छ। सागसब्जी,फल र खाद्यतेलको मूल्यमा केही कमी आउला। महिनाको मध्यमा मन्दझरीको योग छ।

**मासको दान:** यसमासमा सूर्य आराधनाको विशेष महत्व छ। रातोवस्त्र,रक्तचन्दन,तीन्नी(निवार), गूँड, कपास, दूध, शख्खर आदिको दान गर्नु उचित छ।

**माघ:** यस मासमा ग्रहस्थिति सामान्यमात्र छन् ।मंगलबार -को संक्रान्ति र बुधबारको अमावास्या,महिनामा परेका पाँच मंगलबारको योगले जागतिक परिस्थितिमा केही असहज र विग्रहादिको संकेत गर्दछ। सागसब्जी केही सस्ता होलान् भने दुग्धजन्य पदार्थ,गुड,चीनीमा तेजी रहला। दाल,चामल,गहूँ, रुई आदि पदार्थमा समता हुनेछ। लौहवस्तु र वाहनअदिको मूल्य केही बढ्न जाला। हिमपात शीतलहर ज्वरकाशादिको प्रभाव होला। महिनाको पूर्वार्द्धमा मन्दझरीको योग देखिएको छ भने मासान्ततिर मौसममा सुधार होला।

**मासको दान:** यस मासमा तिलदानको विशेष महत्व छ।कालो तिल र यसबाट बनेका वस्तुहरु तिलकुट, लड्डु आदिको दान तथा स्वयं पनि सेवन गर्ने विधान छ। खिचडी,पान,गुँड,कोइलाको दानको महत्व छ।

**फाल्गुन:** मासमा जागतिक परिस्थिति मध्यमजस्ता छन्। विहीवारको संक्रान्ति तथा शुक्रबारको औंसीको योग जनसामान्यका लागि सन्तोषकारक देखिन्छ, दैनिक उपभोग्य वस्तुहरुमा सहजता रहला। चाँदी, सुन, सन, सूत, कपास, तेल, दाख, जाईफल, रेशम, यथावत् हुने छन्, सागसब्जी तथा अन्न-दाल भने केही सस्तो होला। दुग्धपदार्थ र पशुमूल्यमा केही वृद्धि होला। मासान्तमा सुवर्ण, चाँदी, रुई, घृत, चीनी, आदि वस्तुको मूल्यमा केही कमी आउने छ। शेयरबजार मन्दीको प्रभाव केही कम होला। समताको प्रकृति रहे पनि महिनाको मध्यभागमा मेघ बादल दर्शनको योग छ।

**मासको दान:** धान, गहुँ, जौ आदि अन्न, तृण(घाँस आदि) तथा मृगचर्म आदि आसन साथै गो सुवर्णादि धातु दानको विधान छ।

**चैत्र:** मासको जागतिक परिस्थिति सामान्य नै छ। शुक्रबारको संक्रान्ति र शनिबारको औंसीले रसपदार्थ, दाल, रुई,सूतीकपडा,तील,तेल,सर्स्यौं,घृत,ताँमा,पीतल,सुन,चाँदी,धान्य, लौहधातु आदिमा समता ल्याउला,यतिबेला संग्रह गर्नु लाभप्रद नै होला,भने भवन निर्माण सामग्री,लौहपदार्थ तोरीको तेल महँगिएलान् । शेयरबजारमा केही सुधारात्मक संकेत देखिएला। कहीं कतै अग्निकाण्डको त्रास,हावा हुरी र मौसम परिवर्तनको आभासका साथै महिनाको प्रथम र अन्तिम सप्ताहमा मेघदर्शनयोग छ।

**मासको दान:** गहुँ, जौ आदि अन्न, आँप, लिची आदि फल, आसन, कमण्डलु, जलपात्र, माला-गोमुखी, माटाको घैंटो साथै छत्र-उपानह आदि दानको विधान छ।जलाशय,पौशाला(पौसरा), यात्रीविश्रमालय आदिको निर्माणको पनि महत्व छ।

## सर्वार्थसिद्धि योग सं. २०८१

सर्वार्थसिद्धि योग परेको दिन कार्यारम्भ गरेमा निर्विघ्नतापूर्वक कार्य सफल हुन्छ भन्ने शास्त्रीय वचन छ ।

**वैशाख –**
१३ गते १।४५ बजेपछि
१४ गते १८।५६ बजेसम्म
१६ गते ३।८ बजेसम्म
२५ गते १५।२२ बजेसम्म
२६ गते १४।१२ बजेपछि
३१ गते १४।९बजेपछि

**ज्येष्ठ –**
१ गते १५।३४ बजेपछि
१० गते ९।१५ बजेपछि
११ गते १०।१९ बजेसम्म
१३ गते ६।३५ बजेसम्म
२० गते ०।५६ बजेपछि
२३ गते ८।१६ बजेपछि२१।१७ बजेसम्म
२७ गते २१।४० बजेपछि४।४८ बजेसम्म
२८ गते १७।७ बजेपछि२२।५९ बजेसम्म
२९ गते ०।४५बजेसम्म

**आषाढ –**
५ गते १६।४३ बजेपछि
६ गते १७।५४ बजेसम्म
९ गते १८।३१ बजेपछि
१० गते २।५८ बजेपछि
१६ गते ९।४ बजेपछि २३।५९ बजेसम्म
१८ गते ६।१६ बजेपछि
१९ गते अहोरात्र
२१ गते ४।३२ बजेपछि
२३ गते अहोरात्र
२४ गते ६।२५ बजेसम्म
२५ गते ८।५ बजेसम्म

**श्रावण –**
२ गते ५।४३ बजेसम्म तथा १८।२ बजेपछि १।२७ बजेसम्म
६ गते १।४८ बजेसम्म
११ गते १८।५२ बजेपछि ३।१२ बजेसम्म
१३ गते १५।४१ बजेसम्म
१६ गते १२।३० बजेपछि
१८ गते १२।१४ बजेपछि१५।३६ बजेसम्म तथा ३।३० बजेपछि
२० गते १३।५३ बजेसम्म
२६ गते ३।२८ बजेपछि

**भाद्र –**
२ गते ९।४६ बजेसम्म
६ गते ३।३ बजेपछि
७ गते अहोरात्र
१० गते २१।१६ बजेपछि
१३ गते १९।५७ बजेपछि
१४ गते २०।२५ बजेसम्म
२४ गते १४।५८ बजेपछि
२९ गते १७।४२ बजेपछि

**आश्विन –**
४ गते ९।३३ बजेपछि १४।४१ बजेसम्म तथा १।३० बजेपछि
७ गते १९।२६ बजेसम्म
१० गते ४।३ बजेसम्म
२१ गते ६।१६ बजेपछि २३।५८बजेसम्म
२५ गते १।३७ बजेपछि
२६ गते ०।५५ बजेसम्म

**कार्तिक –**
१ गते ६।३५ बजेपछि
२ गते १६।५ बजेसम्म
५ गते अहोरात्र
८ गते ११।४३ बजेपछि
१९ गते ७।२५ बजेसम्म
२३ गते ९।३० बजेपछि १९।५८ बजेसम्म
२४ गते ७।१८ बजेपछि ८।५३ बजेसम्म
२९ गते ०।१४ बजेसम्म

**मार्गशीर्ष –**
१ गते २१।२३ बजेपछि
३ गते १०।४८ बजेसम्म
२१ गते १६।५१ बजेसम्म
२७ गते ८।२४ बजेसम्म
२९ गते १६।१७ बजेसम्म तथा ३।२५बजेपछि ४।१९ बजेसम्म

**पौष –**
१२ गते २०।२० बजेपछि
१४ गते २३।४४ बजेपछि
२३ गते १८।१४ बजेपछि
२७ गते १२।२१ बजेसम्म

**माघ –**
१० गते ३।३७ बजेपछि ४।२८ बजेसम्म
११ गते १७।१७ बजेपछि ५।३८ बजेसम्म
२२ गते ०।४४ बजेसम्म
२८ गते १८।३७ बजेपछि

**फाल्गुन –**
८ गते १०।५३ बजेपछि
९ गते १२।५९बजेसम्म
२० गते ८।५४ बजेसम्म
२१ गते ७।१६ बजेपछि
२६ गते ९।५८ बजेपछि २।३५ बजेसम्म
२७ गते ३।१४ बजेसम्म

**चैत्र–**
३ गते १०।२८बजेसम्म
६ गते १८।८ बजेपछि
७ गते २०।१९ बजेसम्म
१० गते ०।१७ बजेपछि
११ गते ०।४७ बजेपछि
१७ गते १८।४४ बजेपछि
१९ गते १५।२५ बजेपछि२०।४४ बजेसम्म
२० गते ७।३५ बजेपछि
२४ गते १०।१३ बजेपछि
२५ गते १०।१७ बजेसम्म
२६ गते १०।५० बजेसम्म

## सं. २०८१ सालमा साढेसाती शनि विचार

यसवर्ष वर्षारम्भबाट वर्षभरी नै शनिदेव कुम्भराशिमा रहने हुनाले मकर, कुम्भ, मीनराशिलाई क्रमशः अन्त्य, मध्य, आद्य साढेसाती र कर्क तथा वृश्चिक राशिलाई अढैया शनि दशा रहने छ ।

यसमा जन्मको शनि असल भएमा आकस्मिक लाभ, कार्यसिद्धि,आदि शुभ फल पनि दिने हो तर शनि विशेष दुःखदायी ग्रह भएकोले अपव्यय, दुःख-कष्ट, कार्यमा विलम्वता, पारिवारिक चिन्ता, स्वास्थ वाधा, मानसिक अशान्ति, पशुचौपायमा हानि नोक्सानी आदि गराउने हुँदा उक्त राशि हुने व्यक्तिहरूले शनिवार व्रत, पीपल पूजा, जलार्पण परिक्रमा, शनिदेवको जप-पूजा आदि गर्नुगराउनु राम्रो हुनेछ ।

***पीपलमा जल चढाउने मन्त्र:***

मूलतो ब्रह्मरूपाय मध्यतो विष्णुरूपिणे ।
अग्रतः शिवरूपाय अश्वत्थाय नमोनमः ॥

***प्रार्थना गर्ने मन्त्र:***

अश्वत्थयस्मिन्त्वयि वृक्षराजः नारायणस्तिष्ठति सर्वकाले ।
अतः श्रुतस्त्वं सततंतरुणां धन्योऽसि चारिष्टविनाशकोऽसि ॥१॥
कोणोऽन्तको रौद्रयमोऽथवभ्रूः कृष्णः शनिः पिंगल मन्दसौरी ।
नित्यस्मृतो यो हरते च पीडा तस्मै नमः श्रीरविनन्दनाय ॥२॥

***दशाशान्तिका लागि मन्त्र:***

गाधिश्च कौशिकश्चैव पिप्पलादो महामुनिः।शनैश्चरकृतां पीडां नाशयन्ति स्मृतास्त्रयः ॥

***शनिको मन्त्रः***

नमस्ते कोणसंस्थाय पिङ्गलाय नमोऽस्तु ते।
नमस्ते विभुरूपाय कृष्णाय च नमोऽस्तु ते।।
नमस्ते रौद्रदेहाय नमस्ते चान्तकाय च।
नमस्ते यमसंज्ञाय नमस्ते सौरये विभो।।
नमस्ते मन्दसंज्ञाय शनैश्चर नमोनमः।

**श्रीमहामृत्यञ्जय मंत्रः**

ॐ ह्रौं ॐजूं सः भूर्भुवःस्वः ॐत्र्यम्बकं यजामहेसुगन्धिंपुष्टिवर्द्धनम्।उर्व्वारुकमिव बन्धनान्मृत्योर्म्मुक्षीयमाऽमृतात्ॐस्वः भुवः भूः ॐ सः जूं ह्रौं ॐ।

# वि०सं० २०८१ सालको राशिफल

**मेष:** (चु.चे.चो.ला.लि.लु.ले.लो.अ.आद्य नामाक्षर)
तपाँइका ग्रहगोचर राम्रा छन्। वैशाख १७ गतेपछिको दोस्रो वृहस्पति आफ्नो अनुकूल हुने हुनाले आर्थिक र बौद्धिकक्षेत्रमा पर्याप्त सफलता मिल्ला। कुम्भ राशिमा रहेको एकादश शनिले अनेक माध्यमबाट आर्थिक लाभको दिने छ, स्थिरसम्पत्ति जोडिने योग छ, कृषि तथा व्यावसायिक उन्नति पनि होला तर आर्थिक लेनदेनमा विवाद पर्न सक्ला र केही अनावश्यक खर्च पनि हुन जाला। छैठो केतु रोगनिवारक र शत्रुमाथि विजय गराउने, परिवार जनको सुखमा पनि केही वृद्धि गराउने बन्ला। विद्यार्थीवर्गले विशेष परिश्रम गरेमा निकै सफलता पाइएला। कृषक र जागिरेवर्ग प्राय: सन्तोषित रहलान्। दाम्पत्यजीवन निकै सुखद रहला, एकअर्काको परस्पर सहयोगले आर्थिक र व्यापारिक उन्नति हुँदै जाला। वर्षको तेस्रो महिना विशेष फलदायी हुने देखिन्छ।

**वृष:** (इ.उ.ए.ओ.वा.वि.वू.वे.वो. आद्य नामाक्षर)
तपाँइका ग्रहस्थिति साधारणतया राम्रै जस्ता छन्, प्रथम गुरुले केही संघर्षशील बनाउला, स्थानहानिको कारक पनि हुनजाला, गुप्तशत्रुबाट हानि हुनसक्ला। शनिको आंशिक अनुकूलताले सामाजिक र राजकीय कार्यमा सफलता मिल्ला, न्यायालय सम्बन्धी विवादमा विजय मिल्ला, सावधानीपूर्वक गरेमा कार्य सफल होलान्। एकादश राहु सुखकारक होला, अप्रत्याशित आर्थिकलाभ पनि गराउला। दाम्पत्यजीवन जीवन सुखद रहला, तर परिवारिक कलहले मन खिन्न हुन जाला। सन्तानपक्षबाट पनि केही तनावको वातावरण हुन सक्ला। विद्यार्थीवर्गले विशेष परिश्रमपूर्वक अध्ययन गरेमा मात्र आंशिक सफलता मिल्ला अन्यथा विद्याहानिको योग छ। व्यवसायी-कारोबारीहरूलाई आंशिक लाभ पाइने देखिन्छ। श्रावण र चैत्र महिना विशेष फलदायी हुने देखिन्छ।

**मिथुन:** (क.कि.कु.घ.(ङ=ग)छ.के.को.ह. आद्य नामाक्षर)
तपाँइका ग्रहगोचर मध्यममात्र छन्। द्वादश गुरु त्यत्ति सहयोगी छैन, संघर्षपूर्ण वातावरण रहला, गरेका कार्यहरू पनि त्यत्ति फलदायी नहोलान्। व्यवसायी-सेयरकारोबारीहरूलाई पर्याप्त सावधानी अपेक्षित छ अन्यथा हानि हुन सक्ला। चौथो केतु उदर (पेट) रोगको कारण बन्न सक्ला अत: आहारविहारमा सावधानी आवश्यक छ। कार्यक्षेत्रमा सहकर्मीहरूसँग विवाद पर्न सक्ने हुनाले आफै जोगिनु राम्रो होला। स्वगृही नवम शनि आंशिक भाग्योदयको कारक बन्न सक्ला, तर धार्मिककृत्यमा भने अवरोधक रहला र रोग-शोककारक पनि हुनसक्ने देखिन्छ। कठिन समयमा मित्रसहयोग प्राप्त हुनाले मनमा केही शान्ति प्राप्त होला, कुटुम्ववृद्धि पनि हुने देखिन्छ। जागिरेहरूलाई प्रोन्नतिको सम्भावना छ। वैशाख, भाद्र, चैत्र महिना तुलनात्मकरूपमा शुभ छन्।

**कर्कट:** (हि.हू.हे.हो.डा.डि.डू.डे.डो. आद्य नामाक्षर)
तपाँइका ग्रह मध्यममात्र छन्। आठौं(अढैया) शनिले गर्दा कामकार्यमा विलम्बता, दु:ख परेशानी आइपर्ने, शारीरिक कष्टले पनि अत्यन्त सताउने,परिवारमा पनि मनोमानिल्यता हुने, जागिरमा अवाञ्छित स्थानान्तरण,कुनै मुद्दामामिला आइलाग्ने,आफ्नै इष्टमित्रबाट पनि धोका पाइने आदि हुन सक्ने छ। गुरु केही अनुकूल हुनाले स्वव्यवसायबाट राम्रै आम्दानी होला तर अनावश्य व्ययबाट भने निकै सावधान रहनुपर्ने छ। नवौं राहु पापबुद्धिकारक हुनाले कलह र वादविवादको कारक पनि हुन सक्ला व्यर्थ विवादबाट स्वयं नै टाढा रहनु उचित छ, आफन्तजनबाट नै धोका हुन जाला र सम्बन्धमा तिक्तता आउला। तेस्रो केतुले भने यदाकदा आकस्मिक लाभ पनि दिन सक्ला तर कुनै ऋण लिनु दिनुबाट जोगिनु उचित रहला। वैशाख र आश्विन महिना तुलनात्मकरूपमा शुभ छन्।

**सिंह:** (मा.मि.मु.मे.मो.टा.टी.टू.टे. आद्य नामाक्षर)
तपाँइका ग्रहस्थिति साधारणतया मध्यममात्र छन्। गुरु दशम छ यसले कुटुम्बवृद्धि गराउला, भाइबन्धुहरूको सफलतामा आफ्नो पनि योगदान रहला। स्वव्यवसायमा अत्यधिक संयम र सावधानी अपेक्षित छ त्यसबाट राम्रै लाभ होला तर व्यय नियन्त्रणमा निक्कै जोडबल गर्नुपर्ला। विद्यार्थीवर्गले परिश्रमपूर्वक अध्ययन गरेमा उचित सफलता प्राप्त गर्लान्। सातौं शनिले गर्दा आफ्नो वा दाम्पत्यको शारीरिक स्वाथ्यमा केही समस्या पनि आउला त्यसतर्फ विशेष ध्यान दिनु जरुरी छ। आठौं राहु आफ्नै स्वास्थ्यबाधाकारक हुन सक्ला विशेष वातव्याधी (ग्याष्टिक,नशासम्बन्धित रोग, वायुविकार आदि)-ले कष्ट देला, दुर्व्यसनमा फसाउने पनि देखिन्छ। सट्टा वा सेयरबजारबाट टाढै बसेको राम्रो छ। संघर्षमय वर्ष भएपनि ज्येष्ठ, आषाढ, कार्त्तिक,महिना शुभ छन्।

**कन्या:** (टो.प.पी.पू.ष.(ण=ड)ठ.पे.पो. आद्य नामाक्षर)
तपाँइका ग्रहगोचर उत्तम नै छन्। नवौं गुरु धार्मिक र आध्यात्मिक उन्नतिको कारक बन्ला, मातापिताका साथमा तीर्थयात्राको योग पनि छ। भाग्यले पनि निकै साथ देला। छैठो शनि रोग तथा शत्रु नाश गर्ने होला, कुनै पुरानो विवाद आफ्नो पक्षमा रहला, न्यायिकक्षेत्रमा पनि केही सुधार वा अनुकूल लक्षण देखिएला। केही नयाँ व्यवसायको सम्भावना पनि देखिन्छ। शेयर कारोबार तथा स्वव्यवसायमा पनि लाभ देखिएला। कुनै नवीन सम्पत्ति आर्जन पनि होला। विद्यार्थीवर्गको परिश्रम सफल होला। राहु सातौं हुने हुनाले दाम्पत्यमा विवाद हुन सक्छ। पहिलो केतु स्वास्थ्यबाधाकारक हुने हुनाले आहारविहारमा संयमित हुनुपर्ने छ। संतुलित व्यवहारले सामाजिक र धार्मिक क्षेत्रमा यश प्राप्त होला। आषाढ र मार्गशीर्ष महिना विशेष फलदायी हुने देखिन्छ।

# वि०सं० २०८१ सालको राशिफल

**तुलाः** (रा.री.रु.रे.रो.ता.ती.तू.ते. आद्य नामाक्षर)
तपाईंका ग्रह मध्यम जस्ता छन्। आठौं गुरु मानसिक चिन्ताको कारक वन्ला, स्वजन भाइवन्धुमा मतभेद हुने हुनाले मन उद्विग्न होला, व्यर्थ यात्राले धन र समयको हानि पनि हुने देखिन्छ। वाणीको उचित र संयमित उपयोगले मात्र केही लाभ मिल्ला। दाम्पत्य जीवन केही राम्रो रहला परस्परको विचारविनिमयद्वारा गरिएका कामहरू अवश्य सफल होलान्। पञ्चम शनि अध्ययन अध्यापन र सन्तान पक्षमा केही व्यवधानकारक होला। छैठो राहु रोग र शत्रुनाशक भई सुखकारक रहला, आकस्मिक धनलाभ पनि गराउला। शेयरकारोबारबाट पनि केही लाभार्जन गर्न सकिएला। विद्यार्थीहरूले उचित प्रतिफलका लागि विशेष परिश्रम गर्नुपर्ला अन्यथा रोकावट आउने देखिन्छ। व्यापारीवर्गले हानिबाट जोगिन निकै सावधान हुनुपर्ला। श्रावण र पौष महिना आंशिक सफल देखिन्छन्।

**वृश्चिकः** (तो.ना.नि.नू.ने.नो.या.यी.यू. आद्य नामाक्षर)
तपाँइका ग्रहगोचर सामान्य छन्। चौथो (अढैया) शनिको प्रभावले मानसिक तनाव, मिथ्यापवाद, कामकार्यमा विलम्बता, दुःख परेशानी आइपर्ने, शारीरिक कष्टले पनि अत्यन्त सताउने आदि हुन सक्ने छ। दैनन्दिन जीवनका क्रियाकलापादिमा अस्तव्यस्तता,चिन्ता,त्राश आदिको सामना गर्नुपर्ला। साझेदारीको व्यवसायमा वादविवाद आइपर्ला। कष्टसाध्य यात्राको योग पनि देखिन्छ। सप्तम वृहस्पति सुखद दाम्पत्यजीवनकारक रहला,परस्परको विचारविनिमयद्वारा गरिएका कामहरू अवश्य सफल होलान्। राहु पाँचौं हुने हुनाले सन्तान र अध्ययन अध्यापनको क्षेत्रमा भने अनेक व्यवधान उत्पन्न गराउला। एकादश केतु केही सहयोगी र लाभकारी होला, वैदेशिक कार्यमा सफलता पाइएला। तुलनात्मकरूपमा भाद्र, आश्विन र माघ महिना शुभ छन्।

**धनुः** (ये.यो.भा.भी.भू.धा.फा.ढा.भे. आद्य नामाक्षर)
तपाँइका ग्रहगोचर सामान्य मात्र नै देखिन्छन्। छैठो गुरु रोग-शोककारक हुन सक्ला, व्यर्थचिन्ताले मन विचलित रहला। वाणीको उचित र संयमित उपयोगले भने केही लाभ मिल्ला र रोकिएका कामहरू सम्पन्न होलान्। तेस्रो शनिले भने पराक्रममा वृद्धि गराउला र भौतिक सुखसुविधाको वातावरण बन्ला साथै व्यापारमा सफलता र सामाजिक प्रतिष्ठा पनि दिलाउला। विद्यार्थीवर्गलाई पनि निकै सफलता देला, आत्मवल वृद्धि होला। राहु चौथो र केतु दशम छन् फलतः आफ्नो कामप्रति आलस्य र स्वजनमा मतभेद उत्पन्न हुन सक्ला, मानसिक तनाव, मिथ्यापवाद, कामकार्यमा विलम्वता,पुत्र कलत्रादिवाट असन्तोष, चौपायबाट हानि नोक्सानी, दुःख परेशानी आइपर्ने हुनाले आत्मसंयम अपेक्षित छ। तुलनात्मकरूपमा श्रावण, भाद्र र फाल्गुन महिना राम्रा छन्।

**मकरः** (भो.जा.जी.जे.जू.जो.खा.खी.खू.खे.खो.गा.गी. आद्य नामाक्षर)
तपाँइका ग्रहस्थिति सामान्यमात्र छन्। शनिको अन्त्य साढेसाती दशा हुनाले त्यत्ति राम्रो समय देखिँदैन। पशुचौपायबाट हानि नोक्सानी, मिथ्यापवाद,व्यर्थगमन, अनावश्यक व्यय, शत्रु सामना, स्वव्यवसायवाट नोक्सानी, आफ्ना नजिकका व्यक्तिले नै धोका दिने आदि अवाञ्छित कार्यको सामना गर्नुपर्ला, वाहन दुर्घटनाको पनि सम्भावना हुनाले सावधान हुनुपर्ला र विपत्तिमा कसैको पनि सहयोग नपाउने आदि होला। अनुकूल समयको प्रतीक्षा गरी शनिको जप पूजा आदि गर्नु नै उत्तम रहला। पाँचौं वृहस्पतिले भने केही लाभ, बौद्धिक उन्नति,शैक्षणिक प्रगति,सन्तानपक्षवाट सन्तोषजनक स्थिति रहला। राहु तेस्रो हुनाले केही आत्मविश्वास प्राप्त होला तर कुनै नवीन योजनामा हात नराख्नु नै जाति होला। नवौं केतु धार्मिकक्षेत्रमा वाधक रहला, पापवुद्धि पलाउने देखिन्छ, आत्मसंयम आवश्यक छ। अन्य महिनाभन्दा कार्तिक, मार्ग र चैत्र शुभ छन्।

**कुम्भः** (गू.गे.गो.सा.सी.सू.से.सो.द. आद्य नामाक्षर)
तपाँइका ग्रहगोचर मध्यममात्र छन्। संघर्षको स्थिति होला, शनिको मध्य साढेसाती दशा हुनाले त्यत्ति राम्रो समय देखिँदैन। पुत्र कलत्रादिबाट असन्तोष, हानि नोक्सानी, मिथ्यापवाद, व्यर्थगमन, अपव्यय, शत्रु सामना, अनावश्यक डर त्रासले मनमा भयको प्रकोप आदि अवाञ्छित स्थितिको सामना गर्नुपर्ला, हनुमानजीको आराधना गर्नाले शान्ति प्राप्त होला। चौथो गुरु पनि त्यत्ति अनुकूल छैन स्वास्थ्य बाधा, व्यर्थविवाद र पारिवारिक झमेला आइपर्ला। गरिरहेको व्यवसायका साथै घर-जग्गा आदिको काममा भने केही सफलता मिल्न सक्नेछ र त्यसैले आत्मसन्तोष पनि दिने छ। जागिर र व्यापार मध्यम, न्याय र वैदेशिक मामला आंशिक सफल रहला। सहकर्मीबाट तनाव हुन सक्ला अतः सामञ्जस्य मिलाउनु उचित होला। तुलनात्मकरूपमा वैशाख, मार्ग र पौष महिना सफल हुने देखिन्छ।

**मीनः** (दी.दू.थ.झ.(त्र.=ज.)दे.दो.चा.ची. आद्य नामाक्षर)
तपाँइका ग्रहगोचर सामान्यजस्ता छन्। शनिको आद्य साढेसाती दशा हुनाले मानसिक अशान्ति, कामकार्यमा अरुचि, कृषि तथा पशुचौपायाबाट हानि, वाहनदुर्घटना, यश-आत्मवल-इच्छाशक्ति-मानप्रतिष्ठा आदिमा ह्रास, अनावश्यक व्यय, स्वजनको सहयोग र सद्भावमा पनि कमी आउला, भित्र कतै अनिष्टको भयले मनमा विचलन र उद्विग्नता रहला। गुप्त शत्रु क्रियशील हुनाले सदैव कुनै अवाञ्छित स्थितिको अवस्था रहला। भय र शोककारक हुनाले तेस्रो गुरु पनि त्यत्ति राम्रो छैन। श्रमिक, वैतनिक तथा व्यावसायिक मार्ग केही सफल, न्याय तथा वैदेशिक क्षेत्रमा आंशिक फल दिने रहला। अनुकूल समयको प्रतीक्षा गरी शनिको जप पूजा आदि गर्नु नै उत्तम रहला। श्रद्धापूर्वक हनुमानजीको पूजा-आराधनाले शान्ति र सफलता प्राप्त होला। ज्येष्ठ, पौष र माघ महिना केही राम्रा हुने देखिन्छ।

# अथाबकहडाचक्रसहितं वरवधूमेलापकचक्रमिदम्

| चरणागतः | चू चे | ली लू | अ इ | ओ वा | वे वो | कु घ | के को | हु हे | डी डू | मा मी | मो टा | टे टो | पू ष | पे पो | रु रे | ती तू | ना नी | नो या | ये यो | भू धा | भे भो | जु जे | खी खू | गा गी | गो सा | से सो | दू थ | दे दो |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| नामाद्यक्षरः | चो ला | ले लो | उ ए | वी वू | का की | ङ छ | हा ही | हो डा | डे डो | मू मे | टी टू | पा पी | ण ठ | रा री | रो ता | ते तो | नू ने | यी यू | भा भी | फा ढा | जा जी | जो ख | खे खो | गु गे | सी सू | दा दी | झ ञ | चा ची |
| नक्षत्रः | अश्विनी | भरणी | कृत्तिका | रोहिणी | मृगशि. | आर्द्रा | पुनर्वसु | तिष्य | श्लेषा | मघा | पू.फा. | उ.फा. | हस्ता | चित्रा | स्वाती | विशाखा | अनुरा. | ज्येष्ठा | मूल | पू षा | उ.षा. | अभिजि. | श्रवण | धनिष्ठा | शतभि. | पू.भा. | उ.भा. | रेवती |
| राशिः | मेषः | मेषः | मे. १ वृ. ३ | वृषः | वृ. २ मि. २ | मिथुनः | मि. ३ क. १ | कर्कटः | कर्कटः | सिंहः | सिंहः | सिं. १ कं. ३ | कन्याः | कं. २ तु. २ | तुलाः | तु. ३ वृ. १ | वृश्चिकः | वृश्चिकः | धनुः | धनुः | ध. १ म. ३ | मकरः | मकरः | म. २ कुं. २ | कुम्भः | कुं. ३ मी. १ | मीनः | मीनः |
| राशिस्वामीः | भौमः | भौमः | भौ. १ शु. ३ | शुक्रः | शु. २ बु. २ | बुधः | बु. ३ चं. १ | चन्द्रः | चन्द्रः | सूर्यः | सूर्यः | सू. १ बु. ३ | बुधः | बु. २ शु. २ | शुक्रः | शु. ३ भौ. १ | भौमः | भौमः | गुरुः | गुरुः | गु. १ श. ३ | शनिः | शनिः | शनिः | शनिः | श. ३ गु. १ | गुरुः | गुरुः |
| वर्णः | क्षत्रिः | क्षत्रिः | क्ष. १ वै. ३ | वैश्यः | वै. २ शू. २ | शूद्रः | शू. ३ वि. १ | विप्रः | विप्रः | क्षत्रिः | क्षत्रिः | क्ष. १ वै. ३ | वैश्यः | वै. २ शू. २ | शूद्रः | शू. ३ वि. १ | विप्रः | विप्रः | क्षत्रिः | क्षत्रिः | क्ष. १ वै. ३ | वैश्यः | वैश्यः | वै. २ शू. २ | शूद्रः | शू. ३ वि. १ | विप्रः | विप्रः |
| वश्यः | चतुष्पद | चतुष्पद | चतुष्पद | चतुष्पद | च. २ द्वि. २ | द्विपदः | द्वि. ३ ज. १ | जलचरः | जलचरः | चतुष्पद | चतुष्पद | च. १ द्वि. ३ | द्विपदः | द्विपदः | द्विपदः | द्वि. ३ की. १ | कीट | कीट | मनुष्यः | मनुष्यः | म. १ च. ३ | चतुष्पदः | चतुष्पद | च. ३ द्वि. २ | द्विपदः | द्वि. ३ ज. १ | जलचरः | जलचरः |
| योनिः | अश्वः | गजः | अजः | सर्पः | सर्पः | श्वानः | मार्जारः | अजः | मार्जारः | मूषकः | मूषकः | गौः | महिषः | व्याघ्रः | महिषः | व्याघ्रः | मृगः | मृगः | श्वानः | वानरः | नकूलः | नकूलः अजः | वानरः | सिंहः | अश्वः | सिंहः | गौः | गजः |
| वैरयोनिः | महिषः | सिंहः | वानरः | नकूलः | नकूलः | मृगः | मूषकः | वानरः | मूषकः | मार्जारः | मार्जरः | व्याघ्रः | अश्वः | गौः | अश्वः | गौः | श्वानः | श्वानः | मृगः | अजः | सर्पः | अजः गजः | अजः | गजः | महिषः | गजः | व्याघ्रः | सिंहः |
| गणः | देवः | नरः | राक्षसः | नरः | देवः | नरः | देवः | देवः | राक्षसः | राक्षसः | नरः | नरः | देवः | राक्षसः | देवः | राक्षसः | देवः | राक्षसः | राक्षसः | नरः | नरः | नरः देवः | देवः | राक्षसः | राक्षसः | नरः | नरः | देवः |
| नाडीः | आद्यः | मध्यः | अन्त्यः | अन्त्यः | मध्यः | आद्यः | आद्यः | मध्यः | अन्त्यः | अन्त्यः | मध्यः | आद्य | आद्यः | मध्यः | अन्त्यः | अन्त्यः | मध्यः | आद्यः | आद्यः | मध्यः | अन्त्यः | अन्त्यः | अन्त्यः | मध्यः | आद्यः | आद्यः | मध्यः | अन्त्यः |
| आसनः | अश्वः | प्रेतः | अग्निकु. | गौः | मृगः | भुजंगः | कमलः | कलशः | काकः | महिषः | शिलाः | शिलाः | गजः | मयूरः | दोलः | अजः | हंसः | कच्छपः | मूलः | शयनः | शयनः | शयनः नरः | नरः | आढकः | वृषः | भद्रपीठः | भद्रपीठः | चक्रः |

**गरुडादिवर्गाः**

| नामाक्षरः | अ इ उ ए ओ | क ख ग घ ङ | च छ ज झ ञ | ट ठ ड ढ ण | त थ द ध न | प फ ब भ म | य र ल व | श ष स ह |
|---|---|---|---|---|---|---|---|---|
| वर्गः | गरुडः | मार्जारः | सिंहः | श्वानः | सर्पः | मूषकः | मृगः | मेषः |
| शत्रुवर्गः | सर्पः | मूषकः | मृगः | मेषः | गरुडः | मार्जारः | सिंहः | श्वानः |

***विवाहमा नाडी दोष तथा त्यसको परिहार-*** **विवाहमा विविध पक्षहरूलाई सूक्ष्मतापूर्वक विचार गरिनु पर्ने कुरा शास्त्रहरूमा उल्लेख गरिएको छ उक्त मध्ये एक नाडी विचार पनि हो। समान नाडीमा विवाह निषिद्ध छ, त्यसमा पनि मध्य-मध्य नाडी अत्यन्तै त्याज्य छ तर विशेष अवस्थामा यसका केही परिहार (दोष नलाग्ने) यस प्रकार छन्– वर कन्या एकै राशि भिन्न नक्षत्रका वा एकै नक्षत्र फरक राशिका भएमा, वर-कन्या दुबैका नक्षत्र कृत्तिका, रोहिणी, मृगशिरा, आर्द्रा, तिष्य, ज्येष्ठा, श्रवण, उत्तरभाद्र तथा रेवती मध्ये कुनै भएमा, वर-कन्या दुबैका राशिस्वामी बुध, गुरु, शुक्रमध्ये कुनै एक भएमा नाडीको दोष निवारण हुन्छ। विशेष 'नाडीदोषस्तु विप्राणां वर्णदोषस्तु क्षत्रिये। गणदोषश्च वैश्येषु योनिदोषस्तु पादजान्।।' यस वचनानुसार ब्राह्मणवर्गमा नाडी विशेष विचार्य छ। अत्यावश्यक भएमा विधिपूर्वक महामृत्युञ्जय जप, हवन, यथाशक्ति गौ, सुवर्णादि दान आदिद्वारा दोष न्यून गर्न सकिन्छ।**

# वरवधूगुणमेलापकसारिणी

गुणकोष्ठके १८ ऽधिके शुभः

| कन्या राशि | कन्या नक्षत्र | मेष | | | वृष | | | मिथुन | | | कर्कट | | | सिंह | | | कन्या | | |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| | | अश्विनी | भरणी | कृति. १ | कृति. ३ | रोहिणी | मृ. २ | मृ. २ | आर्द्रा | पुन. ३ | पुन. १ | तिष्य | श्लेषा | मघा | पू.फा. | उ.फा. १ | उ.फा. ३ | हस्त | चित्रा २ |
| मेष | अश्विनी | २८ | ३३ | २८॥ | १८॥ | २१॥ | २२॥ | २५॥ | १६॥ | १८॥ | २४॥ | ३२॥ | २९ | २३ | २७ | १७॥ | १०॥ | ९॥ | १२॥ |
| | भरणी | ३४ | २८ | २९ | १९ | २३॥ | १४॥ | १७॥ | २५॥ | २६॥ | ३२॥ | २४॥ | २६॥ | २२ | २० | २८ | २१ | १९॥ | ४॥ |
| | कृ. १ | २७॥ | २९ | २८ | १८ | ११ | १७॥ | २०॥ | १९॥ | २०॥ | २६॥ | २७॥ | २४॥ | १६॥ | २० | २२ | १५ | १५ | १७॥ |
| वृष | कृ. ३ | १८॥ | २० | १९ | २८ | २१ | २७॥ | १८ | १७ | १८ | २३ | २४ | २१ | १८॥ | २२ | २४ | २०॥ | २०॥ | २३ |
| | रोहिणी | २३॥ | २३॥ | १२ | २१ | २८ | ३६ | २६॥ | २३ | २३ | २८ | २९ | १४ | १२॥ | २६॥ | २८ | २४॥ | २५॥ | १९॥ |
| | मृ. २ | २३॥ | १४॥ | १९॥ | २८॥ | ३५ | २८ | १८॥ | २३॥ | २३ | २८ | २१ | २३ | २१॥ | १७॥ | २५॥ | २२ | २५॥ | १२॥ |
| मिथुन | मृ. २ | २६॥ | १७॥ | २२॥ | २० | २६॥ | १९॥ | २८. | ३३ | ३२॥ | २० | १३ | १५ | २४ | २० | २८ | ३०॥ | ३४ | २१ |
| | आर्द्रा | १८॥ | २६॥ | २०॥ | १८ | २४ | २५॥ | ३४ | २८ | २५ | १२॥ | २० | १३ | २३ | २९ | २२ | २४॥ | २४॥ | २७ |
| | पुन. ३ | १८॥ | २५॥ | २२॥ | २० | २३ | २४ | ३२॥ | २४ | २८ | १५॥ | २२॥ | १७ | २३ | २७ | २१ | २३॥ | २४॥ | २६॥ |
| कर्कट | पुन. १ | २३॥ | २९॥ | २६॥ | २३ | २६ | २७ | १९ | १०॥ | १४॥ | २८ | ३५ | २९॥ | १७॥ | २१॥ | १५॥ | १७ | १८ | २० |
| | तिष्य | ३१॥ | २३॥ | २७॥ | २४ | २७ | २० | १२ | १८ | २१॥ | ३५ | २८ | ३० | १८॥ | १४॥ | २४॥ | २६ | २७ | १२ |
| | श्लेषा | २६ | २४॥ | २३॥ | २० | १३ | २१ | १३ | १२ | १५ | २८॥ | २९ | २८ | १६ | १६॥ | १८॥ | २० | २० | २५ |
| सिंह | मघा | २१ | २१ | १७॥ | १८॥ | ११॥ | १९॥ | २२ | २२ | २१ | १७॥ | १९॥ | १७ | २८ | ३० | २६॥ | १६ | १६ | २२ |
| | पू.फा. | २७ | १९ | २१ | २२ | २५॥ | १७॥ | २० | २८ | २७ | २३॥ | १७॥ | १७॥ | ३० | २८ | ३४ | २३॥ | २२ | ८ |
| | उ.फा. १ | १८॥ | २७ | २२ | २३ | २७ | २५॥ | २८ | २१ | २१ | १७॥ | २६॥ | १९॥ | २६॥ | ३४ | २८ | १७॥ | १६॥ | १४ |
| कन्या | उ.फा. ३ | १२॥ | २१ | १६ | २०॥ | २४॥ | २३ | ३०॥ | २३॥ | २३॥ | १९ | २८ | २१ | १७ | २४॥ | १८॥ | २८ | २७ | २४॥ |
| | हस्त | १०॥ | १९॥ | १७ | २१॥ | २४॥ | २५॥ | ३३ | २२॥ | २३॥ | १९ | २८ | २२ | १८ | २२ | १६॥ | २६ | २८ | २८ |
| | चित्रा | १२॥ | ५॥ | १८॥ | २३ | १९॥ | ११॥ | १९ | २६ | २४॥ | २० | १२ | २६ | २३ | ९ | १५ | २४॥ | २७ | २८ |

| कन्या राशि | कन्या नक्षत्र | तुला | | | वृश्चिक | | | धनु | | | | मकर | | | | कुम्भ | | | मीन | | |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| | | चित्रा २ | स्वाती | विशा. ३ | विशा. १ | अनुराधा | ज्येष्ठा | मूल | पू.षा.।। | पू.षा.३।। | उ.षा. १ | उ.षा. ३ | श्रव१।। | श्रव२।। | धनि. २ | धनि. २ | शतभिषा | पू.भा. ३ | पू.भा. १ | उ.भा. | रेवती |
| मेष | अश्विनी | २२ | २७ | २२ | १९॥ | २६॥ | १५ | १२॥ | २४॥ | २६ | २३ | २६ | २७ | २५॥ | २१ | १९॥ | १४॥ | १५॥ | १५॥ | २५॥ | २७ |
| | भरणी | १४ | २९ | २२ | १९॥ | १७॥ | १९॥ | १९॥ | १७॥ | १९ | २५॥ | २८॥ | २७ | २५॥ | ११ | ९॥ | १९॥ | २३॥ | २३॥ | १८॥ | २७॥ |
| | कृ. १ | २७ | १५ | १९ | १६॥ | २०॥ | २६॥ | २४ | १७॥ | १९ | १२॥ | १५॥ | १२॥ | ११ | २६ | २४॥ | २६॥ | १८॥ | १८॥ | २०॥ | १२॥ |
| वृष | कृ. ३ | २२ | १० | १४ | २१॥ | २५॥ | ३१॥ | १९॥ | १३ | १४॥ | ८ | १४ | ११ | ९॥ | २४॥ | २९ | ३१ | २३ | २१ | २३ | १५ |
| | रोहिणी | १८॥ | १५ | ९ | १६॥ | ३०॥ | २४॥ | १३॥ | १९॥ | २१ | ११ | १७ | १९ | १७॥ | २१ | २५॥ | २४ | ३० | २८ | २७ | २० |
| | मृ. २ | ११॥ | २४॥ | १८ | २५॥ | २३॥ | २५॥ | १४॥ | १०॥ | १२ | १६॥ | २२॥ | २७ | २५॥ | १४ | १८॥ | २६॥ | २९ | २७ | १८ | २८ |
| मिथुन | मृ. २ | १४ | २७ | २०॥ | १५ | १२ | १५ | २३ | १९ | १७॥ | २५ | २० | २४॥ | २६ | ११॥ | १३ | २१ | २३॥ | २५॥ | १६॥ | २६॥ |
| | आर्द्रा | २० | २७ | २० | १४॥ | १८ | ४ | १६ | २८ | २६॥ | २८ | २३ | २३ | २४॥ | १७॥ | १९ | १२ | १७ | १९ | २६॥ | २६॥ |
| | पुन. ३ | १९॥ | २७ | २१ | १५॥ | २१॥ | ७ | १४ | २७ | २५॥ | २७ | २२ | २३ | २४॥ | १८ | १९॥ | १३ | १७ | १९ | २७ | २६॥ |
| कर्कट | पुन. १ | १९॥ | २७ | २१ | २० | २६ | ११॥ | ८ | २१ | २३॥ | २१ | २६ | २७ | २५॥ | २२ | १३॥ | ७ | ११ | १७ | २५ | २४॥ |
| | तिष्य | ११॥ | २६॥ | २१ | २० | १९ | २२ | १७ | ११ | १२॥ | २२ | २७ | २५ | २३॥ | १३ | ४॥ | १४॥ | १८ | २४ | १८ | २७ |
| | श्लेषा | २४॥ | ११॥ | १६॥ | १५॥ | २० | २६ | २२॥ | १६ | १७॥ | ८ | १३ | १३ | ११॥ | २७ | १८॥ | १८॥ | १२॥ | १८॥ | २० | १२ |
| सिंह | मघा | २५ | ११ | १७ | २४॥ | २६॥ | ३४ | २४॥ | १९॥ | २१ | १० | ५॥ | ५॥ | ४ | १८॥ | २४ | २५ | १८ | १८॥ | १९॥ | १३ |
| | पू.फा. | ११ | २५ | १९ | २६॥ | २४॥ | २६॥ | १८॥ | १७॥ | १९ | २५॥ | २१ | १९॥ | १८ | ४॥ | १० | १९ | २४ | २४॥ | १७॥ | २५॥ |
| | उ.फा. १ | १७ | २६ | १७ | २४॥ | ३३॥ | १९॥ | १० | २५॥ | २७ | २६॥ | २२ | २१ | १९॥ | १२॥ | १८ | १२ | १६ | १६॥ | २७॥ | २५॥ |
| कन्या | उ.फा. ३ | १६॥ | २५॥ | १६॥ | १९ | २८ | १४ | १४ | २९॥ | २८ | ३०॥ | २५॥ | २४॥ | २६ | १६ | १६॥ | १०॥ | १४॥ | १७॥ | २८॥ | २६॥ |
| | हस्त | २० | २६॥ | १८॥ | २१ | २७ | १४ | १५ | २७ | २५॥ | २८॥ | २३॥ | २४॥ | २६ | २०॥ | २१ | ९॥ | १५॥ | १८॥ | २६॥ | २७॥ |
| | चित्रा | २० | १९ | २६॥ | २९ | १३ | २७ | २७ | १३ | ११॥ | २२ | १७ | १७॥ | १९ | १६॥ | १७ | २४ | १७॥ | २०॥ | १०॥ | २०॥ |

विवाहमा वरकन्याको नक्षत्रका आधारमा माथि लेखिएको सारणीबाट गुण ज्ञान गर्न सकिन्छ,तेर्सो वरको ठाडो कन्याको नक्षत्र जोडिने कोष्ठको अङ्क गुण हो,१८ अङ्क वा धेरै मिलेमा शुभ हुन्छ । वर-कन्याको परस्पर राशिबाट ९।५,२।१२,६।८ परेमा दुष्कुट र अन्यमा सत्कुट हुन्छ। सत्कुट भएमा १६ गुण र दुष्कुट भएमा १८ गुणसम्म विवाह गर्नुहुदैन । २० गुणसम्म मध्यम र सो भन्दा माथि भएमा उत्तम हुन्छ । ग्रह नक्षत्रादिको किरणको असर प्रत्येक प्राणीमा प्रत्यक्ष-परोक्ष रूपमा अवश्य परिरहेको हुन्छ सोही अनुरुप विश्वका प्रत्येक मानिसमा भिन्नता हुने हो, अतःवर-कन्या दुबैको स्वभावगत मेलमिलाप पनि यसैबाट निर्धारित हुने र मिलान गरेरमात्र विवाह गर्नुपर्ने आप्तवचन रहेको छ ।

प्रश्नद्वारा विवाह-चिन्तन– तात्कालिक अवस्थामा विवाहसम्बन्धी जिज्ञासाको चिन्तन प्रश्नलग्नका आधारमा गर्नुपर्छ । केही उपयोगी संकेत यी हुन सक्छन्– शुभ ग्रहले युत वा देखिएका वृष, कर्क र तुला लग्न, चन्द्र-शुक्र समराशि वा समनवांशकमा भएमा, लग्नमा विषम राशिगत चन्द्र-शुक्रको दृष्टि भएमा, सप्तम भाव बुध-गुरु शुक्र वा चन्द्रले युत भएमा, समराशिको लग्न समराशिकै द्रेष्काणमा शुभ ग्रहको दृष्टि भएमा शिघ्र विवाहकारक हुन्छ भने कृष्णपक्षमा समराशिगत चन्द्र १, ६, ८ भावमा पापग्रहद्वारा युत वा देखिएमा, लग्नस्थ चन्द्रलाई मंगलले देखेमा, पंचमभावमा पाप ग्रह भई निचस्थ ग्रहद्वारा देखिएमा, लग्न वा सप्तमका पाप ग्रहलाई निचस्थ ग्रहद्वारा देखिएमा विवाहमा बाधा वा अयोग्य होला ।

# वरवधूगुणमेलापकसारिणी

गुणकोष्ठके १८ ऽधिके शुभः

| कन्या राशि | वर राशि → / कन्या नक्षत्र ↓ | मेष | | | वृष | | | मिथुन | | | कर्कट | | | सिंह | | | कन्या | | | तुला | | | वृश्चिक | | | धनु | | | | मकर | | | | कुम्भ | | | मीन | | |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| | नक्षत्र | अश्विनी | भरणी | कृति. १ | कृति. ३ | रोहिणी | मृ. २ | मृ. २ | आर्द्रा | पुन. ३ | पुन. १ | तिष्य | श्लेषा | मघा | पू.फा. | उ.फा. १ | उ.फा. ३ | हस्त | चित्रा २ | चित्रा २ | स्वाती | विशा. ३ | विशा. १ | अनुराधा | ज्येष्ठा | मूल | पू.षा.।। | पू.षा.३।। | उ.षा. १ | उ.षा. ३ | श्रव १।। | श्रव २।। | धनि. २ | धनि. २ | शतभिषा | पू.भा. ३ | पू.भा. १ | उ.भा. | रेवती |
| तुला | चित्रा २ | २२ | १५ | २८ | २३ | १९॥ | ११॥ | १३ | २० | १८॥ | १९॥ | ११॥ | २५॥ | २६ | १२ | १८ | १७॥ | २० | २१ | २८ | २७ | ३४॥ | २४॥ | ८॥ | २२॥ | २७ | १३ | ११॥ | २२ | २५ | २५॥ | २७ | २४॥ | १९ | २६ | १९॥ | १३॥ | ३॥ | १३॥ |
| तुला | स्वाती | २८ | २९ | १७ | १२ | १५ | २५॥ | २७ | २६ | २७ | २८ | २७॥ | १३॥ | १३ | २५ | २६ | २५॥ | २७॥ | २१ | २८ | २८ | २० | १० | २२॥ | १७॥ | २३ | २७ | २५॥ | १९ | २२ | २३ | २४॥ | २८॥ | २३ | २१ | २७ | २१ | १९॥ | १२॥ |
| तुला | विशा. ३ | २२ | २३ | २० | १५ | १० | १८ | १९॥ | २० | २० | २१ | २१ | १७॥ | १८ | २० | १८ | १७॥ | १८॥ | २७॥ | ३४॥ | १९ | २८ | १८ | १८ | २२॥ | २७ | २१ | १९॥ | १४ | १७ | १६ | १७॥ | ३१ | २५॥ | २६ | २९ | १५ | १३ | ५॥ |
| वृश्चिक | विशा. १ | १७॥ | १८॥ | १५॥ | २०॥ | १५॥ | २३॥ | १३ | १३॥ | १३॥ | १९ | १९ | १५॥ | २३॥ | २५॥ | २३॥ | १८ | १९ | २८ | २३॥ | ८ | १७ | २८ | २८ | ३२॥ | २२॥ | १६॥ | १७॥ | ९॥ | १३ | १२ | ११ | २७ | २६ | २६॥ | २९॥ | २१ | १९ | ११॥ |
| वृश्चिक | अनुराधा | २५॥ | १५॥ | २०॥ | २५॥ | २८॥ | २९॥ | ११ | १६ | २०॥ | २६ | १९ | २१ | २६॥ | २२॥ | ३१॥ | २६ | २६ | १२ | १७॥ | २९॥ | १७ | २८ | २८ | ३१ | १६॥ | १४॥ | १५॥ | २२॥ | २६ | २७ | २६ | १४ | १३ | २२ | २६॥ | २६ | १९ | २७ |
| वृश्चिक | ज्येष्ठा | १३ | १८॥ | २५॥ | ३०॥ | २३॥ | २३॥ | १३ | ३ | ५ | १०॥ | २१ | २६ | ३३ | २५॥ | १८॥ | १३ | १२ | २५ | २०॥ | १५॥ | २०॥ | ३१॥ | ३० | २८ | १५ | १७॥ | १८॥ | १७॥ | २१ | २१ | २० | २७ | २६ | १९ | १२ | ११॥ | २२ | २१ |
| धनु | मूल | ११॥ | १९॥ | २४ | १८॥ | १२॥ | १२॥ | २१ | १५ | १२ | ८ | १७ | २३॥ | २४॥ | १८॥ | १० | १३ | १३ | २६ | २६ | २१ | २६ | २३॥ | १६॥ | १६ | २८ | २८ | २६॥ | २६॥ | १५ | १५ | १६॥ | २० | २८॥ | २९॥ | १४॥ | १६ | २५ | २६॥ |
| धनु | पू.षा.।। | २५॥ | १८॥ | १७॥ | १२ | १८॥ | १०॥ | १९ | २७ | २७ | २३ | १३ | १७ | १९॥ | १७॥ | २५॥ | २८॥ | २७ | १२ | १२ | २७ | २० | १७॥ | १६॥ | १८॥ | २८ | २८ | २६॥ | ३४ | २२॥ | २३ | २४॥ | ८ | १६॥ | २३॥ | ३०॥ | ३२ | २३ | ३२ |
| धनु | पू.षा.३।। | २७ | २० | १९ | १३॥ | २० | १२ | १७॥ | २५॥ | २५॥ | २४॥ | १४॥ | १८॥ | २१ | १९ | २७ | २७ | २५॥ | १०॥ | १०॥ | २५॥ | १८॥ | १८॥ | १७॥ | १९॥ | २६॥ | २६॥ | २८ | ३२॥ | २४ | २४॥ | २३ | ९॥ | १५ | २२ | २९ | ३३॥ | २४॥ | ३३॥ |
| धनु | उ.षा. १ | २४ | २५॥ | १२॥ | ७ | १० | १६॥ | २५ | २७ | २७ | २३ | २४ | ९ | १० | २५॥ | २६॥ | २९॥ | २८॥ | २१ | २१ | १९ | १३ | १०॥ | २४॥ | १८॥ | २६॥ | ३६ | ३४॥ | २८ | १६॥ | १६॥ | १८ | १५ | २३॥ | २३॥ | २९॥ | ३१ | ३२ | २३ |
| मकर | उ.षा. ३ | २८ | २९॥ | १६॥ | १४ | १७ | २३॥ | २० | २२ | २२ | २८ | २९ | १४ | ६॥ | २२ | २३ | २५॥ | २४॥ | १७ | २४ | २२ | १६ | १४ | २८ | २२ | १६ | २५॥ | २७ | १७॥ | २८ | २८ | २६॥ | २६॥ | १७ | १७ | २३ | ३०॥ | ३१॥ | २२॥ |
| मकर | श्रव. १।। | २८ | २८ | १४॥ | १२ | १८ | २७ | २३॥ | २१ | २२ | २८ | २६ | १५ | ७॥ | १९॥ | २१ | २३॥ | २४॥ | १८॥ | २५॥ | २२ | १६ | १४ | २८ | २३ | १७ | २३ | २४॥ | १४॥ | २५ | २८ | २६॥ | ३० | २०॥ | १८ | २३ | ३०॥ | २९॥ | २३॥ |
| मकर | श्रव. २।। | २६॥ | २६॥ | १३ | १०॥ | १६॥ | २५॥ | २५ | २२॥ | २३॥ | २६॥ | २४॥ | १३॥ | ६ | १८ | १९॥ | २५ | २६ | २० | २७ | २३॥ | १७॥ | १३ | २७ | २२ | १८॥ | २४॥ | २३ | १६ | २३॥ | २६॥ | २८ | २८॥ | २२ | १९॥ | २४॥ | २९ | २८ | २२ |
| मकर | धनि. २ | २१ | १२ | २७ | २४॥ | २१ | १३ | ९॥ | १६॥ | १६ | २२ | १३ | २८ | १९॥ | ५॥ | १३॥ | १६ | १९॥ | १६॥ | २३॥ | २६॥ | ३० | २८ | १४ | २८ | २१ | ८ | ९॥ | १६ | २६॥ | २८ | २६॥ | २८ | १८॥ | २३॥ | १९ | २६॥ | १५॥ | २२॥ |
| कुम्भ | धनि. २ | १९॥ | १०॥ | २५॥ | ३० | २६॥ | १८॥ | १२ | १९ | १८॥ | १३॥ | ४॥ | १९॥ | २५ | ११ | १९ | १७॥ | २१ | १८ | १९ | २२ | २५॥ | २७ | १३ | २७ | २९॥ | १६॥ | १५ | २४॥ | १८ | १९॥ | २१ | १९॥ | २८ | ३३ | २८॥ | १८ | ७ | १४ |
| कुम्भ | शतभिषा | १४॥ | २०॥ | २७॥ | ३२ | २५ | २६॥ | २० | १२ | १३ | ८ | १४॥ | २०॥ | २७ | २१ | १३ | ११॥ | ९॥ | २५ | २६ | २० | २६ | २७॥ | २२ | २० | २२॥ | २४॥ | २३ | २४॥ | १८ | १८ | १९॥ | २४॥ | ३३ | २८ | १९ | ८॥ | १७ | १६ |
| कुम्भ | पू.भा. ३ | १७॥ | २४॥ | १९॥ | २४ | ३१ | ३१ | २४॥ | १७ | १८ | १३ | २० | १३॥ | १९ | २५ | १७ | १५॥ | १७॥ | १८॥ | १९॥ | २८ | २९ | २२॥ | २८॥ | १३ | १५॥ | ३०॥ | २९ | ३०॥ | २४ | २४ | २५॥ | २० | २८॥ | १९ | २८ | १७॥ | २२॥ | २० |
| मीन | पू.भा. १ | १५॥ | २२॥ | १७॥ | २० | २७ | २७ | २५॥ | १८ | १९ | १८ | २५ | १८॥ | १७॥ | २३॥ | १५॥ | १६॥ | १८॥ | १९॥ | १२॥ | २१ | १४ | २१ | २७ | ११॥ | १५ | ३० | ३१॥ | ३० | २९॥ | २९॥ | २८ | २५॥ | १७ | ७॥ | १६॥ | २८ | ३३ | ३०॥ |
| मीन | उ.भा. | २५॥ | १६॥ | १९॥ | २२ | २६ | १८ | १६॥ | २५॥ | २७ | २६ | १९ | २० | १८॥ | १६॥ | २६॥ | २७॥ | २६॥ | ९॥ | २॥ | १९॥ | १२ | १९ | २० | २२ | २४ | २२ | २३॥ | ३१ | ३०॥ | २९॥ | २८ | १९॥ | ६ | १६ | २९॥ | ३३ | २८ | ३४ |
| मीन | रेवती | २६ | २५॥ | १७॥ | १५ | १८ | २७ | २५॥ | २४॥ | २६॥ | २५॥ | २७ | १४ | १४ | २४॥ | २४॥ | २५॥ | २६॥ | २०॥ | १३॥ | ११॥ | ५॥ | १२॥ | २७ | २२ | २६॥ | २९ | ३०॥ | २१ | २०॥ | २१॥ | २० | २२॥ | १४ | १६ | १८ | २९॥ | ३४ | २८ |

षडष्टके द्वन्द्ववियोगकारी धनंदपुत्रस्त्वशुचित्रिकोणे। द्विद्वादशेनिर्धनताव्ययश्च नाडीसमाने मरणायनूनम् ।।
यस वचनानुसार वरकन्याको परस्पर राशिबाट २-१२, ६-८, ९-५ पर्नुहुँदैन तर निम्न राशिहरूमा उक्त दोष छैन।

**वर-कन्याको राशिबाट ग्राह्य द्विर्द्वादश**

| २ | ४ | ६ | ८ | १० | १२ | ५ |
|---|---|---|---|---|---|---|
| ३ | ५ | ७ | ९ | ११ | १ | ६ |

**वर-कन्याको राशिबाट ग्राह्य षडाष्टक**

| २ | ४ | ६ | १ | १० | १२ |
|---|---|---|---|---|---|
| ७ | ९ | ११ | ८ | ३ | ५ |

**वर-कन्याको राशिबाट ग्राह्य नवपञ्चक**

| १ | १ | २ | २ | ३ | ५ | ७ | ९ |
|---|---|---|---|---|---|---|---|
| ५ | ९ | ६ | १० | ७ | ९ | ११ | १२ |

**नोटः जु जे जो ख अभिजित् (उत्तराषाढको चौथो पाउ र श्रवणको १५ भागको १ भाग मिलेर बनेको हुन्छ।**

भौमदोष ज्ञानम् - लग्ने १ व्यये १२ च पाताले ४ जामित्रे ७ चाष्टमे ८कुजे। पत्नी हन्ति स्वभर्तारं भर्ता भार्यां न संशयः।।
भौमदोष परिहारः जामित्रे च यदा सौरिर्लग्ने वा हिबुकेऽथ वा। नवमे द्वादशे चैव भौमदोषो न विद्यते।।
न मङ्गली चन्द्रभृगू द्वितीये न मङ्गली पश्यति यस्य जीवः। न मङ्गली केन्द्रगते च राहु न मङ्गली मङ्गलराहुयोगे।।

## सर्वकार्यसिद्धिका लागि होरा मुहूर्त

सबै कार्य सिद्धिका लागि होरा मुहूर्त पूर्ण फलदायक हुन्छ। सातग्रहको सातवटै होराहरू हुन्छन्। ती सातवटै होराहरू दिन-रात चौबीसै घण्टा घुमेर मानव कार्यसिद्धिका लागि अशुभ समयमा पनि सुखद् अवसर प्रदान गर्दछन्। सूर्यको होरा राजसेवा र नोकरीका लागि उत्तम मानिन्छ। प्रवास(यात्रा)का लागि शुक्रको होरा, ज्ञानगुन(विद्या)का लागि बुधको होरा, सबैकार्य सिद्धिका लागि चन्द्रमाको होरा, द्रव्यसंग्रहका लागि शनिको होरा, विवाहका लागि गुरु (वृहस्पति)को होरा, युद्ध र वाद-विवादका लागि मङ्गलको होरा श्रेष्ठ मानिन्छ। प्रत्येकवारको सूर्योदयकाल त्यसै वारको होराबाट आरम्भं हुन्छ र दोस्रो घण्टाको होरा त्यस वारबाट छैठौं वारको हुन्छ, यस प्रकार चौबीस घण्टामा सबै वारका होराहरू घुम्दछन्। जुन कार्यसिद्धिका लागि जुन होरा श्रेष्ठ देखिएको छ, कुनै पनि दिन त्यस होरा (एक घण्टा) को मुहूर्तमा त्यो अभिष्ट कार्य गरियो भने सफलता पाइन्छ भन्ने धारणा छ।

**उदाहरणका लागिः** मानौं आज विहीवार हो र आजै हामीलाई कतैको यात्रा गर्नुछ यात्राका लागि शुक्रको होरा श्रेष्ठ लेखिएको छ। अतः यो जान्न परेको छ कि आज विहीवार शुक्रको होरा कुन बेला रहन्छ? विहीवारको सन्दर्भमा हेर्दा ४, ११ र १८औं घण्टामा शुक्रको होरा पाइन्छ। अतः विहीवार सूर्योदयको समयदेखि ४, ११ वा १८ घण्टामा शुक्रको होरामा यात्रा गर्दा उत्तम हुन्छ। यसै तरिकाले अन्य दिनमा पनि अभिष्ठकार्यको होरा जान्न सकिन्छ। यहाँ दिइएको चक्रमा तेर्सोक्रममा रहेका वार-हरूबाट चाहिएको वार र ठाडोक्रमका होराहरूबाट चाहिएको होरा लिने दुबैको संयोग जहाँ हुन्छ त्यसवारको त्यस घण्टामा सोही होरा हुन्छ । जस्तै चक्रमा हेर्दा आइतवार १,८,१५,२२ औं होरा सूर्यको, ५,१२,१९ औं होरा शनिको होरा देखियो,यस्तै प्रकारले अन्य दिनका अन्य होराहरू पनि जान्न सकिन्छ।

| होरा ↓ / वार → | आ. | सो. | मं. | बु. | बृ. | शु. | श. |
|---|---|---|---|---|---|---|---|
| १,८,१५,२२ | सू. | चं. | मं. | बु. | गु. | शु. | श. |
| २,९,१६,२३ | शु. | श. | सू. | चं. | मं. | बु. | गु. |
| ३,१०,१७,२४ | बु. | गु. | शु. | श. | सू. | च. | मं. |
| ४,११,१८ | चं. | मं. | बु. | गु. | शु. | श. | सू. |
| ५,१२,१९ | श. | सू. | चं. | मं. | बु. | गु. | शु. |
| ६,१३,२० | गु. | शु. | श. | सू. | चं. | मं. | बु. |
| ७,१४,२१ | मं. | बु. | गु. | शु. | श. | सू. | चं. |

## पञ्चकदाह र शान्तिको सम्बन्धमा

निर्णयसिन्धु तथा धर्मसिन्धु अनुसार यदि कसैको मृत्यु पञ्चक पूर्व भई दाह संस्कार पञ्चकमा हुन्छ भने पुत्तलाको विधान गर्नु शान्ति नगर्दा पनि हुन्छ। मृत्यु पञ्चकमा भई दाह पञ्चकपछि हुन्छ भने पुत्तलाको विधान नगर्नु शान्ति मात्र गर्दा पनि हुन्छ। मृत्यु र दाह दुबै पञ्चकमा हुने भएमा पुत्तला र शान्ति दुबै विधि गर्नुपर्दछ, यसो नगरेमा कुलमा अन्य मृत्यु हुनेछ। धनिष्ठा नक्षत्रको आधादेखि रेवतीको अन्तसम्म (चन्द्रमा कुम्भ र मीन राशि मा) पञ्चक रहन्छ। यसका साथै त्रिपुष्कर र भरणी नक्षत्रमा मृत्युभएमा पनि यस्तो दोष लाग्छ। यस अनिष्टको निवारणार्थ कुशका पाँचवटा पुत्तला बनाएर ऊर्णसूत्रले बेरेर जौको पिठोले लेपन गरी तिनै पुत्तालाको साथमा शवदाह गर्नुपर्दछ। यी पाँचको नाम क्रमशः प्रेतवाह, प्रेतसखा, प्रेतप, प्रेतभूमिप र प्रेतहर्त्ता हुन्। **दाहको सङ्कल्प-** *अद्येह अमुकनामा अमुक गोत्रस्य वा गोत्राया प्रेतस्य वा प्रेताया धनिष्ठादि पञ्चक जनित वंशानिष्टपरिहारार्थं पञ्चक विधि करिष्ये।* यस्तो सङ्कल्प गरेर सबै पुत्तलाहरूको क्रमशः पूजागर्नु, पूजनपछि पहिलो प्रेतवाहलाई शवको शिरमा, दोस्रो प्रेतसखलाई आँखामा, तेस्रो प्रेतपलाई वायाँ कोखमा, चौथो प्रेतभूमिमपलाई नाभिमा, पाँचौं प्रेतहर्त्तालाई पाउमा राखेर नाम मन्त्रले घृत आहुति र जलधारा दिने **मन्त्र-** *यमाय सोमं मधुमत्तयेषां तेनोगावः स्वदन्तु हब्या। दूतं वो देवः स्वदयं मुमेषातेनोरासं तमुरुमा यमद्ययूयं पातः स्वस्तिभिः सदा नः।। त्र्यम्बकं यजामहे सुगन्धिम्पुष्टिवर्द्धनम्। उर्व्वारुकमिववन्धनान् मृत्योर्मुक्षीयमाऽमृतात्।* यी मन्त्रहरूले घ्यूको आहुति क्रमशः नाम अनुसार ॐ प्रेतवाहाय स्वाहा, ॐ प्रेतसखे स्वाहा, ॐ प्रेतपाय स्वाहा, ॐ प्रेतभूमिपाय स्वाहा, ॐ प्रेतहत्र्रे स्वाहा दिएर दाह गर्नुपर्दछ। यो अति संक्षिप्तविधि हो, शान्तिका लागि एघारौं वा बाह्रौं दिन पाँचै नक्षत्रका अधिपति लगायत यमराज, मृत्युञ्जयको विधिपूर्वक पूजन हवन आदि गर्नुपर्दछ।

## जन्मोत्सवपूजाः

मनुष्यले जीवनमा सुख, सम्पत्ति, आयु, आरोग्य आदि प्राप्तिका निमित्त प्रत्येक जन्मतिथिमा जन्मोत्सव (वर्षाभिवृद्धि) पूजा गर्नुपर्दछ। जन्मतिथि उदयकालिक लिनुपर्दछ। संक्षिप्तविधि यसप्रकार छ–

**स्नानसङ्कल्पः** अद्येहेत्याद्युच्चार्य अमुकगोत्रोऽमुकराशिरमुकशर्म्माहं आयुरभिवृद्धये संव्वत्सरावच्छिन्न-सुखप्राप्तिकामस्तिलकल्कीमिश्रिततिलोदकेन स्नानं करिष्ये।

**नवीनवस्त्रधारणम्-** ॐ परिधास्यैयशोधास्यैदीर्घायुत्वायजरदष्टिरस्मि। शतंचजीवामिशरदः पुरूचीरायस्पोषम भिसंव्ययिष्ये।।

**प्रधानसङ्कल्पः** अद्येहेत्यादि अमुकगोत्रोऽमुकराशिरमुकशर्म्माहं मम जन्मदिवसे वर्षवृद्धौ जन्मोत्सवकर्मणि दीर्घायुरारोग्यैश्वर्योदयाद्यभिवृद्ध्यर्थं दीपकलशगणेशपूजनपूर्वकं मार्कण्डेयाद्यष्टचिरञ्जीविनां महाषष्टिकायाश्च यथासंपादितोपचारैः पूजनमहं करिष्ये। ततो ब्राह्मणवरणं पुण्याहवाचनं च विधाय, दीपकलशगणेशं च यथाविधिना पाद्यादिरुपचारैः सम्पूजयेत्।

**ततोऽष्टदलेषु-** पूर्वे-मार्कण्डेयम्। आग्नेये-व्यासम्। दक्षिणे-परशुरामम्। नैऋत्ये-द्रोणिम्। पश्चिमे-कृपाचार्यम्। वायव्ये-बलिम्। उत्तरे-हनूमन्तम्। ईशाने-विभीषणम्। मध्ये-षष्ठिकां च स्थापयित्वा ध्यानावाहनादिक्रमेण यथासम्पादितोपचारैः सम्पूजयेत्।

**नाममन्त्रेण पूजनम्-** ॐ कुलदेवताय नमः, ॐ जन्मनक्षत्रेशाय अमुकाय नमः, ॐ प्रकृतिपुरुषात्मक-मातृपितृभ्यां नमः, ॐ ब्रह्मणे नमः, ॐ भानवे नमः, ॐ विघ्नेशाय नमः ततो जन्मसंवत्सर तिथिवासर-नक्षत्रयोगकरणं राशिलग्नमुहूर्तादिश्चपूजनञ्च कारयेत्।

**पोटलीकाधारणम्** - ततः पीतवस्त्रे आचारादष्टोतरशतदूर्वाक्षतसिद्धार्थगुग्गुल गोरोचननिम्बपल्लवान् धृत्वा तत्र गणेशंभास्करञ्च पूजयित्वा पीतसूत्रेण पोटलिकां बद्ध्वा **मार्कण्डेयं प्रार्थयेत्-** मार्कण्डेय महाभाग सप्तकल्पान्तजीविन। आयुरारोग्यसिद्ध्यर्थं प्रसीद भगवन् मुने। चिरञ्जीवी यथा त्वं भो भविष्याम तथा मुने। रूपवान्वित्तवाँश्चैव श्रिया युक्तश्च सर्वदा।। चिरञ्जीवी यथा त्वं तु मुनीनां प्रवरो द्विज। कुरूष्व मुनिशार्दूल तथा मां चिरजीविनम्। तदनन्तरं दक्षिणभुजे धारयेत्।

**ततःषष्ठीकादेवीं प्रार्थयेत्** - जय देवि जगन्मातर्जगदानन्दकारिणि। प्रसीद मम कल्याणि महाषष्टि मनोऽस्तुते। रूपं देहि यशो देहि भद्रं भवति देहि मे। त्रैलोक्ये यानि भूतानि स्थावराणि चराणि च। ब्रह्मविष्णुशिवैः साद्धं रक्षां कुर्वन्तु तानि मे।। इति सम्प्रार्थ्य ततोऽञ्जलिना मार्कण्डेयाय निवेदयेत्। ततः स्वगृहोपयुक्त विधिनाऽग्निं स्थापयित्वा अस्मिन् कर्मणि प्रतिष्ठि देवातभ्यः प्रधान भूतेभ्यो यथासंख्याकं तिलया होमं च कारयेत्।

**पयःपञ्चवारं पिवेत् तत्र मन्त्रः-** सतिलगुडसम्मिश्रमञ्जल्यर्द्धमिदं पयः। मार्कण्डेयाद्वरं लब्ध्वा पिबाम्यायुर्विवृद्धये।। ततो अर्घ्यं निवेद्य पूर्णपात्रं कृत्वा तिलपात्रदानं कृत्वा ब्राह्मणेभ्यो दक्षिणां दत्वा देवान् विसर्ज्य, कलशोदकेन अभिषेकं कृत्वा कायेनवाचेति कर्मेश्वरार्पणं कृत्वा कर्म समापयेत्।

# विविध मुहूर्त्तहरू

**बालक जन्मदा:-** ज्येष्ठा, मूल, अश्लेषा, मघा, अमावास्या, कृष्ण चतुर्दशीमा, आमाबाबु र सहोदर दाजुदिदीका नक्षत्रमा, ग्रहणकालमा, 'तिथि गण्डान्त (५।१०।१५।३० तिथिको पछिल्लो १ घडी र १।६।११ तिथिको आदिको १ घडी), नक्षत्र गण्डान्त (अश्ले., ज्येष्ठा, रेवतीको पछिल्लो २ घडी र अश्वि.,मघा, मूलको आदिको २ घडी), लग्न गण्डान्त (४।८।१२ लग्नको पछिल्लो आधा घडी र १।५।९ लग्नको आदिको आधा घडी), व्यतिपात-वैधृति योग, संक्रान्ति, चित्रा नक्षत्रको तेस्रो पांउ, उत्तराफाल्गुनीको पहिलो पाउ, तिष्यको २।३ पाउमा, तिथिक्षय, भद्रा, यमघण्टयोग, दग्धयोग, कुलिक, कालबेला, विष्कुम्भ-वज्रयोगको ३ घडी, गण्डको ६ घडी, परिघपूर्वार्द्ध, शूलको ५ घडी, व्याघातको ९ घडी आदिमा बालक जन्मेमा अनिष्ट हुन्छ । यसमा सामान्य रूपले शान्तिका लागि रुद्री-चण्डी पाठ लगायत शान्तिका अन्य योग्य प्रयत्नहरू गर्नुपर्दछ । मूल नक्षत्रको पहिलो पाउले बाबुलाई, दोस्रोले आमालाई, तेस्रोले धनसम्पत्तिलाई अनिष्ट तर चौथोले शुभ गराउँछ, त्यस्तै अश्लेषाको पहिलोले शुभ गराउने, दोस्रोले धनसम्पत्तिलाई, तेस्रोले आमालाई र चौथो पाउले बाबुलाई पिर्छ । मूल-श्लेषाको चतुर्थ-प्रथमले मित्रलाई अनिष्ट गर्छ भन्ने पनि मान्यता छ । ज्येष्ठाको पछिल्लो २ घडी मूलको आदिको २ घडी अभुक्त((कडा) मूल हुने हुँदा उपरोक्त अवधिमा जन्मेका बच्चालाई ८ वर्षसम्म बाबुले मुख हेर्नुहुँदैन भन्ने वचन छ यस्तो अवस्थामा मूलशान्तिका उपायहरू महामृत्युञ्जयको जप आदि विशेष कार्य लगायत बच्चा जन्मनासाथ गोप्रसव (गाईबाट जन्मेको बनाउने) कार्य गर्नुपर्दछ । अमावास्यामा जन्मेको बालकले बाबुआमालाई अनिष्ट गर्छ भने बालिकाले पतिलाई पिरोल्छे । तीन गर्भसम्म पुत्र भएर चतुर्थ गर्भमा पुत्रीको जन्म वा ३ गर्भसम्म पुत्री भएर ४ गर्भमा पुत्र भएमा त्रितर योग हुन्छ, यस योगले मातापिता र कूललाई अनिष्ट गर्छ भन्ने गरिन्छ अतः त्रितरयोगको शान्ति गर्नु योग्य हुनेछ ।

**अमावाश्या जन्म शान्ति विधि:-** विधिवत् कलश स्थापना गरी अमादेवता सूर्यको तामा र चन्द्रमाको चाँदीको प्रतिमा बनाई थालीमाथि राखी प्रतिष्ठापूर्वक पूजा गरी सवित्रे प्रसवित्रे. आदि तथा सोमोधेनुं सोमोअर्वन्तं. आदि मन्त्रले ११०० हवन गर्नुपर्दछ ।

**कृष्ण चतुर्दशी जन्म शान्ति विधि:-** नन्दीमा विराजमान त्रिनेत्री शिवको स्वर्णप्रतिमा बनाई विधिवत् षोडषोपचार पूजा गर्नू, महामृत्युञ्जयको जप, नवग्रहको १०८ हवन, पुरुषसूक्त पाठ गर्नुपर्दछ ।

**भद्रा, विष्कुम्भ-व्यतिपात-वैधृति-परिघ योग, यमघण्ट-दग्ध योग आदिमा जन्म शान्ति विधि:-** सविधि पञ्चाङ्ग देवता पूजन, वर-पीपलपूजा प्रदक्षिणा, विष्णुमन्त्रले यथायोग्य हवन, सप्तसती पाठ गर्नु राम्रो हुनेछ ।

**समान नक्षत्र जन्म शान्ति विधि:-** विधिवत् संकल्प गरी जन्म नक्षत्रको स्वर्णप्रतिमा बनाई चन्द्रमा समेतको पूजा,साथै महामृत्युञ्जय मन्त्रले यथाशक्ति हवन गरी शान्ति कलशको जलले आमाबाबु तथा सहोदरलाई सेचन गर्नुपर्दछ ।

**ग्रहण जन्म शान्ति विधि:-** ग्रहण स्पर्श नक्षत्रको तथा सूर्य ग्रहणमा सुनको सूर्यको,चन्द्रग्रहणमा चाँदीकोचन्द्रमाको प्रतिमा साथै सीसाको राहुको प्रतिमा बनाई सूर्यलाई रातो, चन्द्रमा तथा नक्षत्रलाई सेतो र राहुलाई कालो अक्षता, फूल, वस्त्रादिले पूजा गरी महामृत्युञ्जय मन्त्रले यथाशक्ति हवन गरी शान्ति कलशको जलले आमाबाबु तथा जातकलाई सेचन गर्नुपर्दछ ।

**गण्डान्त जन्म शान्ति विधि:-** सुतकान्तमा वा कुनै शुभकालमा बाबुले शान्ति गर्नू त्यतिञ्जेल जातकको मुख नहेर्नू । तिथि गण्डान्तमा बाच्छो, नक्षत्र गण्डान्तमा बाच्छी र लग्न गण्डान्तमा सुन दान गरी महामृत्युञ्जय मन्त्रले यथाशक्ति हवन गरी शान्ति कलशको जलले आमाबाबु तथा जातकलाई सेचन गर्नुपर्दछ ।

**अभुक्त मूल (ज्येष्ठान्त,मूलादि) जन्म शान्ति विधि:-** जन्मको २७ औं दिन (जन्मनक्षत्र परेको दिन) वा आठौं वर्षको अन्त दिनमा यसको शान्ति गर्ने विधान छ, त्यसपूर्व बाबुले जातकको मुख हेर्नुहुँदैन । शान्तिका लागि आफ्नो घरको पूर्वतर्फ यज्ञविधिपूर्वक मण्डप बनाएर नक्षत्रेशको स्वर्णप्रतिमा कलशमाथि स्थापना गरी इन्द्र, वरुण समेतको षोडशोपचार पूजा गर्ने, अर्को एक शतछिद्र कलश बनाई दुबै कलशको जलले आमाबाबु तथा जातकलाई स्नान गराउने तथा महामृत्युञ्जय मन्त्रको यथाशक्ति जप र हवन गर्नुपर्दछ । **विशेषः-** यहाँ जन्म-शान्ति सम्बन्धी संकेतमात्र गरिएको हो, विशेष जानकारीका लागि शान्तिप्रकाश वा अन्य कुनै प्रामाणिक ग्रन्थ अवलोकन गर्न अनुरोध गरिन्छ ।

**बालकको दाँत पहिलो पटक उम्रिदाको मासफल:-** पहिलो महिनामा दाँत आउँदा आफ्नै नाश, दोस्रो महिनामा दाँत आएमा भाइको नाश, तेस्रो महिनामा दाँत आएमा दिदी-बहिनीको नाश, चौथो महिनामा दाँत आएमा आमालाई कष्ट, पाँचौ महिनामा दाँत आएमा दाजुको नाश, छठौं महिनामा दाँत आएमा अत्यन्त सुखी, सातौं महिनामा दाँत आएमा बाबुलाई सुख, आठौं महिनामा दाँत आएमा आफ्नै शरीर तन्दुरुस्ती, नवौं महिनामा दाँत आएमा लक्ष्मीप्राप्ति, दशौं महिनामा दाँत आएमा सुखी हुने भन्ने गरिन्छ तर माथिबाट दाँत आएमा वा दाँत सहित जन्म भएमा बाबुआमा, स्वयं र आफन्तहरूलाई असर पर्ने हुनाले शान्तिका लागि रुद्री-चण्डीको पाठ लगायत महामृत्युञ्जयको जप आदि गर्नुपर्दछ ।

**अन्नप्राशनमुहूर्त:-** पुत्रको ६ वा ८, कन्याको ५ वा ७ महिनामा दुबैपक्षको २।३।५।७।१०।१३तिथि,सोम, बुध,गुरु,शुक्रवार,अश्वि.रो. मृ.पु.ति.३उत्तरा.ह.चि.स्वा. अनु.अभि.श्र.ध.श.रे.यी १७ नक्षत्रमा, जन्मर्क्ष-लग्नदेखि अष्टम लग्न उसका नवमांशक १।८।१२ लग्नछाडी केन्द्र त्रिकोणमा शुभग्रह ३।६।११ मा पापग्रह भई दशम स्थान शुद्ध गरी शुभबेलामा अन्नप्राशन गराउनु वेश छ ।

**कर्णवेधमुहूर्त:-** चैत्र, पौष, तिथिक्षय, चतुर्मास, जन्म महिना, रिक्तातिथि, समवर्ष, जन्मतारा छाडी ६।७।८ महिनामा वा जन्मदेखि १२।१६ दिनमा, सोम, बुध, गुरु, शुक्रवार, विषमवर्ष, अ.मृ.पु. ति.ह.चि.अनु.अभि.रे.नक्षत्रमा, केन्द्रत्रिकोणमा शुभग्रह, ३।६।११ स्थानमा पापग्रह भई गुरु-शुक्रका लग्नमा अष्टमस्थान शुद्ध गरी कर्णवेध गर्नुपर्दछ । छोराको दाहिने र छोरीको वाम कान पहिला छेड्नुपर्दछ ।

**चूडा(मुण्डन)मुहूर्त:-** गर्भाधान वा जन्मदेखि विषम३।५।७ वर्षमा, ८।१२ रिक्ता १।६ तिथि, पर्वदिन, चैत्रमहिना, जन्मराशि या लग्नदेखि अष्टमलग्न छाडी, उत्तरायण, सोम, बुध, शुक्रवार, शुभलग्न शुभ नवांशमा लग्नदेखि अष्टशुद्ध गरी ३।६।११मा पापग्रह भै मृ.रे.चि.स्वा.पु. श्र.ध.श.ह.अश्वि.ति.अभि.ज्ये. यी १३ नक्षत्रमा मुण्डन गर्नु राम्रो हुनेछ ।

**अक्षरारम्भमुहूर्त:-** गणेश,विष्णु,सरस्वती,लक्ष्मीको पूजा गरी

५ वर्षमा ११।१२।१०।२।५।६।३ तिथि,उत्तरायण, ह.अश्विव.ति.अभि.श्र. स्वा.रे.पुन.श्ले. चि.अनु.नक्षत्रमा, सोम,बुध,गुरु, शुक्रवारमा चरलग्न छाडी शुभलग्न शुभांशकमा अक्षरारम्भ गराउनु शुभ हुन्छ।

**व्याकरणारम्भमुहूर्तः**-अश्विव.रो.मृ.पुन.तिष्य.ह.चि.स्वा.वि.अनु. यी १० नक्षत्रमा बुध,गुरु, शुक्रवारमा शुभ होला।

**गणितारम्भ मुहूर्तः**- रो.मृ.ति.ह.अनु.श.पूभा.रे. यी ८ नक्षत्रमा, बुध, गुरु र शुक्रवार शुभ छ।

**जलाशयारम्भमुहूर्तः**- रो.मृ.ति.३उत्तरा.ह.अनु.पूषा.ध.श.रे. नक्षत्रमा, बुध, गुरु लग्नमा भै १० स्थानमा शुक्र र जलचर राशिका चन्द्रमा भएका बखतमा पापग्रह निर्वली भई गुरु शुक्रको उदय पारी राहुको मुखपीठमा गराई तलाउ, कुवा, जलाशयको आरम्भ गर्नु शुभ छ।

**कन्यावरणमुहूर्तः**-कृ.रो.मृ.मघा.३ पूर्वा.३उत्तरा.ह.स्वा.अनु.मू. श्र.ध.रे.१३ यी नक्षत्रमा र शुभवारमा शुभ छ।

**स्वयम्वरमुहूर्तः**-कृ.रो.३पूर्वा.३उत्तरा यी नक्षत्रमा शुभ छ।

**प्रथमरजस्वलायां जलस्पर्शनमुहूर्तः**- अश्विव.मृ.३उत्तरा. ह.स्वा.अनु. रे. यी ९ नक्षत्रमा, रवि, भौम, गुरुवारमा शुभ छ।

**सूतिका जलस्पर्शमुहूर्त**:- अश्विव.मृ.३उत्तरा.ह.स्वा.रे.वि. यी ९ नक्षत्रमा, आइत,मंगल,गुरुवारमा शुभ हुन्छ।

**वधूप्रवेशमुहूर्तः**- विवाहदेखि १६ दिनभित्र, सम दिन वा ५।७।९ दिनमा वा १६ दिन नाघ्यो भने विषम मास वा विषम वर्ष लिनू ५ वर्षदेखि अधिक भए शुभ मुहूर्तमा ३ उत्तरा.रो.ह.अश्विव.ति.अभि.मू. रे.चि.अनु.श्र.ध.म.स्वा. यी १६ नक्षत्रमा ४।९।१४ तिथि, आइत, मंगल, बुधवार छाडी वधुप्रवेश गर्नु राम्रो हुनेछ।

**नवीनवधु पाककर्म गर्ने मुहूर्त्तः**- कृ.रो.मृ.ति.३ उत्तरा.वि.ज्ये.श्र.ध.श.रे यी नक्षत्रमा, आइत, मंगल, शनिवार, छाडी शुभतिथिमा अष्टम शुद्ध, सप्तम बली भएको स्थिर लग्न पारी पाककर्म शुरु गर्नुपर्दछ।

**द्विरागमनमुहूर्तः**- सन्मुख तथा दक्षिण शुक्रछाडी विषम १।३।५ वर्ष, ११।१।८ राशिको सूर्यमा, रवि, गुरु शुद्धि भई सोम, बुध, गुरु, शुक्रवार, ३।१२।६।७।२ लग्नमा ह.अश्विव.ति.अभि.३उत्तरा.रो.स्वा.पु.श्र.ध.श. मू.रे.चि.अनु.मृ. यी १८ नक्षत्रमा द्विरागमन गर्नु राम्रो हुनेछ।

**शिलान्यासमुहूर्तः**- अश्विव.रो.मृ.ति.ह.३उत्तरा.श्र.रे. यी १० नक्षत्र शुभ छन्।

**द्वारन्यासमुहूर्तः**- अश्विव.३उत्तरा.ह.ति.श्र.मृ.स्वा.रे.रो. यी ११ नक्षत्रमा द्वार-चक्र जुराई ढोका बसाल्नु शुभ छ।

**जीर्णगृहप्रवेशमुहूर्तः**-कार्त्तिक, मार्गशीर्ष, श्रावणमास, श.ति.स्वा.ध.मृ.रे.चि.अनु.३ उत्तरा.रो.यी १२ नक्षत्रमा जीर्णगृह प्रवेश गर्नू गुरु शुक्रास्तको दोष छैन।

**गृहारम्भ मुहूर्तः**- कर्त्ताको सूर्य, गुरु चन्द्रबली भै जामित्र-विवाहोक्त सम्पूर्णदोष छाडी ४।९।१४ तिथि, आइत, मंगलवार चरलग्न चराशंक छाडी, मृ.रे.चि. अनु.३उत्तरा.रो.श.स्वा.ध.ह.ति. यी १३ नक्षत्रमा, पौष, फाल्गुन, वैशाख, श्रावण, कार्तिक, मार्गशीष मासमा, वृषवास्तुचक्रसमेत जुराई गृहारम्भ गर्नु शुभ छ।

**गृहवास्तुमुहूर्त**:- वैशाख, श्रावण, कार्त्तिक, मार्गशीर्ष, फाल्गुन महिना, रो.मृ.पु.ति. उफा.ह.चि.स्वा.अनु.पूषा.श्र.ध.श.रे.अश्विव. यी १५ नक्षत्रमा २।३।५।६।१०।११ लग्नमा वास्तुचक्रसमेत जुराई वास्तु गर्नु शुभ छ।

**गृहच्छादनमुहूर्तः**- २।३।५।१०।११।१३ तिथिमा, ह.अश्विव.ति. अभि.चि.स्वा.मृ. पु.रो.उफा.उषा.अनु. यी १२ नक्षत्रमा आइतवार तथा मंगलवार छाडी गृहच्छादन (घर छाउनु) गर्नु शुभ छ।

**गृहप्रवेशमुहूर्तः**- उत्तरायण, ज्येष्ठ, माघ, फाल्गुन तथा वैशाख मासमा, मृ.रे.चि.अनु.३ उत्तरा.रो.यी ८ नक्षत्रमा, जन्मराशि वा लग्नदेखि ३।६।११ मा पापग्रह १।२।५।७।९।१० स्थानमा शुभग्रह भई ४।८ स्थान शुद्धगरी जन्मर्क्ष लग्नदेखि अष्टमलग्न छाडी, आइत, मंगलवार, रिक्ता अमा.तिथि, चरलग्न, चरांशक, चैत्रमास छाडी शुद्ध भकूटमा गाई, कन्या, जलपूर्ण कलश र ब्राम्हण अघि लगाई कलशचक्रसमेत जुराई गृहप्रवेश गर्नू तर गुरु-शुक्रको अस्तमा गृहप्रवेश गर्नुहुँदैन।

**राजदर्शनमुहूर्तः**- मृ.अश्विव.ति.ध.श्र.ह.३उत्तरा.अ.चि.रे.नक्षत्रमा मंगलसहित शुभवार, शुभतिथिमा घातचन्द्र छोडी राजदर्शन सेवा गर्नु शुभ छ।

**दोकानखोल्नेमुहूर्त्तः**- रिक्तातिथि, मंगलवार छाडी अस्वि.रो. मृ.ति. ३उत्तरा.ह.चि.अनु.रे. यी नक्षत्रदेखि २।१०।११ मा शुभग्रह ८।१२ मा पापग्रह भएका स्थिरलग्न पारी दोकान खोल्नु शुभ छ।

**कपालदारी नङ् बनाउदाको मुहूर्तः**- अश्विव.मृ.पु.ति.ह.चि.स्वा.ज्ये. श्र.ध. श.रे. यी १२ नक्षत्रमा सोम,बुध,शुक्रवार शुभ छन्।

**द्रव्यप्रयोगमुहूर्तः**- स्वा.पु.म.रे.चि.अनु.वि.ति.श्र.ध.श.अश्विव. यी नक्षत्रमा बुधवार छाडी चरलग्नदेखि ५।८।९ स्थान शुद्ध गरी धन दिनू, मंगलवार नलिनू ऋणलिनाले उसका वंशमा सदा ऋण रहला।

**शीतलावेधमुहूर्तः**- अश्विव.रो.मृ.ति.ह.चि.स्वा.अनु.अभि.श्र.ध.रे यी १३ नक्षत्रमा आइत, मंगल, वृहस्पतिवार शुभ छन्। लोकमा द्वित्रि-पुष्कर-पंचक, जन्मवार, जन्मनक्षत्र छाड्दछन्।

**चुल्लीनिर्माणमुहूर्तः**- अश्विव.रो.आ.ति.३पूर्वा.३उत्तरा.नक्षत्र शुभ छन्,चुल्ली चक्र जुराउनु शुभ छ, लोकमा श्रावणमास त्याग्छन्।

**हलसारो गर्ने मुहूर्तः**- अश्विव.रो.मृ.पु.ति.३उत्तरा.ह.चि.स्वा.वि. अनु.मू.श्र.ध. श.रे.यी नक्षत्रमा आइत, शनिवार, ४।६।९।१४ तिथि,४।५।७।१०।११ लग्न छोडी हलचक्रजुराई हलो जोत्नू।

**बीजछर्दा मुहूर्तः**- अ.रो.मृ.ति.३उत्तरा.ह.चि.स्वा.अनु.मू.ध.रे. यी नक्षत्रमा, आइत, मंगल, शनिवार, ४।६।९ तिथि, ४।५।७।१०।११ लग्नछोडी फणीचक्र जुराई बिउ छर्नू।

**रोपाजी गर्ने मुहूर्तः**- रो.उफा.वि.मू.श.पूभा.यी ६नक्षत्रमा, मंगल, शनिवार छोडी बिउ छरेका ठाउँबाट अन्त सार्नु, रोप्नु शुभ छ।

**मुठी लिने मुहूर्तः**- भ.कृ.मृ.आ.ति.अश्ले.म.३उत्तरा.ह.चि.स्वा.ज्ये. मू.पूषा.श्र.ध.पूभा.यी१९ नक्षत्रमा, ४।९।१४ तिथि, मंगल शनिवार छोडी पाकेका अन्न काट्नु-टिप्नु-उखेल्नु वेस छ।

**दाजी गर्ने मुहूर्तः**- रो.म.पूफा.उफा.अनु.ज्ये.मू.श्र.रे.यी ९ नक्षत्र।

**भकारीमा अन्न भर्ने मुहूर्तः**-अश्विव.रो.मृ.पु.ति.३ उत्तरा.ह. चि. स्वा. अनु. मू. श्र. ध. रे. यी नक्षत्रमा, आइत, मंगल शनिवार १।४।७ लग्न छोडी तयार भएको अन्न भकारीमा थन्क्याउनु बेस छ।

**भकारीबाट अन्न झिक्ने मुहूर्त** :-अश्विव.रो.पु.ति.३ उत्तरा.स्वा.वि.ज्ये. श्र. ध.श.यी नक्षत्रमा आइत,मंगल,शनिवार पंचवर्ग छोडी भकारीबाट अन्न झिक्नु शुभ छ।

**नवान्नप्राशनमुहूर्तः**- अश्विव.मृ.पु.ति.ह.चि.स्वा.अनु.अभि.श्र.ध. श.रे. यी १३ नक्षत्रमा, १।६।११ तिथि, शनि, मंगलवार, चैत्र पौष, विषघटी छाडी नवान्नप्राशन न्वागी खाँदा शुभ हुन्छ।

**पशुहरूको गृह(गोठ)प्रवेश मुहूर्तः**-४।९।१४।८।३० तिथि, मंगलवार,

श्र.३ उत्तरा.रो.नक्षत्र छाडी शुभग्रहका लग्नदेखि ८ स्थान शुद्धगरी उनका योनि नक्षत्रमा योगिनीचक्रसमेत जुराई पशुलाई सार्नु शुभ हुन्छ ।
**पशुखरिदविक्री मुहूर्तः-** अश्वि.पु.ति.ह.वि.ज्ये.श.रे. शुभ छन्।
**वस्त्रधारण मुहूर्तः-** अश्वि.ह.चि.स्वा.अनु.रे. यी नक्षत्रमा सधवा स्त्रीले वस्त्र वा गहना लगाउनू । स्त्री वा पुरुषहरूलाई रिक्तातिथि छाडी पु.ति.रो.आ.३ उत्तरा. यी नक्षत्रमा बुध, गुरु, शुक्रवार शुभ छन्।
**काठको खलियो लाउँदाः-** रो.आ.म.पूफा.ह.स्वा.वि.अनु.मू.पूषा. श्र.यी नक्षत्रमा आइत, सोम, भौम, बुध, शुक्रवार शुभ छन् । काष्ठस्थापनचक्र जुराउनुपर्छ ।
**मीत लाउने मुहूर्तः-** मृ.ति.पूफा.चि.रे. यी नक्षत्रमा, ८।१२ तिथि, तैतिल करण, सोम, बुध, गुरु, शुक्रवार शुभ छन् ।
**खातारम्भमामुहूर्त्तः-** राहुको मुख र नाग जुराउई खनन गर्नुपर्दछ ।
**व्यापार गर्ने मुहूर्तः-** अश्वि.रो.पु.ति.३उत्तरा.ह.चि.अनु.मू.श्र.रे. यी नक्षत्रमा, आइत, सोम, बुध, गुरुवार दाहिने वा सन्मुख चन्द्रपारी व्यापार गर्नु राम्रो हुनेछ ।
**पुराणश्रवणमुहूर्त्तः** अश्वि.रो.मृ.ति.अनु.ह.मू.श्र. यी ८ नक्षत्रमा शुभतिथि, शुभवार मा, गुरुशुक्रको उदयकालमा पुराण श्रवणचक्र जुराई पुराणश्रवण प्रारम्भ गर्नुपर्दछ।
**अयदेश परत्वेन गुरुशुक्रोयोर्वाल्यवार्धक्य विचारः-** शुक्रो गुरुः प्राक् परतश्च वालो विन्ध्ये दशावन्तिषु सप्तरात्रम् ॥ हूणेषुवंगेषु च षट् च पञ्च शेषेषु देशे त्रिदिनं वदन्ति ॥ (बालत्व बृद्धत्व ३, ३ दिन छोड्नुपर्दछ ।)
**दीक्षाग्रहणमुहूर्तः-** वैशाख, श्रावण, आश्विन, कार्तिक, मार्गशीर्ष मासमा, अश्वि. रो.मृ.आ.३ पूर्वा.३ उत्तरा.पु.ति.ह.वि.स्वा.अनु.मू.श्र.ध. श.रे. नक्षत्रमा, आइत, सोम, बुध, गुरु, शुक्रवारमा २।३।५।८।११ शुक्लपक्ष र २।३।५ कृष्णपक्षको तिथि, गुरुशुक्रको उदयकालमा, २।३।४।५।६।७।९।१२ यी लग्नमा, चन्द्रमा र तारा- बल जुराई लग्नदेखि ३।६।११ स्थानमा पापग्रह केन्द्र त्रिकोणमा शुभग्रह र गुरु शुक्रको लग्नमा दृष्टि भै भद्रा छोडी संक्रान्ति र सूर्य-चन्द्रग्रहणमा दीक्षा मन्त्र लिनू।
**अथ गुरुशुक्रोयोरस्ते वर्जितकर्मः** वापीकूपतडागयज्ञभवनं क्षौरं प्रतिष्ठा व्रतम्॥ विद्यार्मन्दिरकर्णवेधनमहादानं गुरोः सेवनम् ॥ तीर्थयात्रा-विवाह-काम्य-हवनं मन्त्रोपदेशं शुभम् ॥ दूरेणैवजिजीविषुः परिहरेदस्ते गुरौ भार्गवे ॥ इति ॥
(गुरुशुक्रको अस्त समय अशुद्ध समय हो यस कालमा घर, मन्दिर, कुवा, जलाशयादि निर्माण, काम्य प्रयोग, तीर्थयात्रा, विवाह, मन्त्रोपदेश, यज्ञयागादि कार्य वर्जित छन् गरेमा निष्फल हुन्छन् आवश्यकत्वेन निष्काम प्रयोग तथा नित्य-नैमित्तिक प्रयोग भने गर्न सकिन्छ ।)

## यात्रा (साइत)–सम्बन्धी विविध विचार

घर वा बसेको ठाउँ छोडी अन्यत्र जानलाई यात्रा भनिन्छ । यात्रामा **लिएका तिथिः** २, ३, ५, ७, १०, ११, १३, १५ ।
**लिएका नक्षत्रः** अश्वि.मृ.पु.ति.ह.अनु.श्र.ध.रे. शुभ ।
**छाडिएका नक्षत्रः** ३ उत्तरा.भ.कृ.आ.श्ले.म.चि.स्वा.वि. अशुभ । शेष मध्यम । वारमा दिशाशूल छोडेर अन्य वारहरू शुभ हुन्छन् ।
**चन्द्रमा र लग्नः** सन्मुख वा दाहिने पर्ने दिशाका राशिको लग्न वा चन्द्रमा शुभ,अन्य अशुभ । **दिशाशूल-** पूर्वमा १, ९ तिथि ज्ये. नक्षत्र शनि, सोमवार शूल हुन्छ । दक्षिणमा- ५, १३ तिथि ध. श. पूभा. उभा. रे. नक्षत्र गुरुवार शूल हुन्छ । पश्चिममा-४, १४ तिथि रो. नक्षत्र आइत, शुक्रवार शूल हुन्छ। उत्तरमा- २, १० तिथि उफा. नक्षत्र मंगल, बुधवार शूल हुन्छ । **कालशूलः** पूर्वमा सूर्योदय, दक्षिणमा मध्यान्ह, पश्चिममा सूर्यास्त, उत्तरमा मध्यरात्रि शूल हुन्छ नजानु । एकै दिनमा पुगिने यात्रामा (हिड्दा) शूल र योगिनीको विचार नगरे पनि हुन्छ । **कालराहुः** आइतवार-उत्तर,सोमवार-वायव्य, मंगलवार-पश्चिम, बुधवार-नैऋत्य, वृहस्पतिवार-दक्षिण, शुक्रवार-आग्नेय, शनिवार-पूर्व दिशामा कालराहु हुन्छ सन्मुख दाहिने नपार्नू । **द्विद्वारी नक्षत्रः** मृ.ति.ह.श्र. सबै समयमा अश्वि.ति.ह.अनु. सबै दिशालाई शुभ छन्। वार-नक्षत्र स्थूल र सूक्ष्म दुई हुन्छन् । स्थूल नभए सूक्ष्मवार नक्षत्रको बेला-मुहूर्त्त पारी यात्रा गर्नु शुभ हुन्छ । यात्राको लग्नशुद्धिले सब शुद्ध हुन्छ तेसैमा पनि मन शुद्धि छैन भने शुभसाइत भए पनि यात्रा नगर्नू, सबैमा मनोत्साह चाहिन्छ । "उषः प्रशस्यते गर्गः शकुनं च वृहस्पतिः । अङ्गिराश्च मनोत्साहो विप्रवाक्यं जनार्दनः ॥" आफ्नो जन्मवार, जन्म नक्षत्रमा पनि यात्रा गर्नुहुँदैन । बाबुछोरा, दाजुभाई, नौजना स्त्री र तीनजना ब्राम्हण एकैसाथ यात्रा गर्नुहुँदैन भन्ने मान्यता छ । यात्रामा वासस्थानबाट **हिंड्दा पढ्ने मन्त्रः-** गच्छ गौतम शीघ्रत्वं ग्रामेषु नगरेषु च । आसनं भोजनं शैयचां स्थानं मे परिकल्पयः ॥ **विशेषतः** स्त्रीहरूले यात्रा गर्दा सम्मुख वा दाहिने शुक्र पार्नुहुँदैन । स्त्रीणां गमने दक्षिणसम्मुख **शुक्रदोषः-** सम्मुखे दक्षिणे शुक्रे नो गच्छेतु कदाचन । गर्भिणीस्तु विगर्भास्यान्नवोढा वन्ध्यतामियात् ॥
**तत्परिहारः-** रेवत्यादि मृगान्तेच यावत्तिष्ठति चन्द्रमा । तावदन्धो भवेत्शुक्रः सम्मुखे दक्षिणे शुभः ॥

**सम्मुख वा दाहिने शुक्रको दोष नलाग्ने दिन-**
रेवतीदेखि मृगशिरा नक्षत्रसम्म चन्द्रमा हुँदा शुक्र अन्ध हुन्छ, सम्मुख दाहिने शुक्रको दोष लाग्दैन शुक्र अस्त भएमा पनि दोष छैन ।
**यात्राबाट निवृत्त भएर गृहप्रवेश गर्दा-** नवम दिन-वर्ष-मास ४, ६, ८, ९, १२, १४ तिथि छोडी अनु.चि.मू.३उत्तरा. रे.रो. यति नक्षत्रमा प्रवेश गर्नु शुभ हुन्छ । **विशेष-** नवम दिन-वर्ष-मासमा प्रवेश गर्नै पर्ने भएमा रात परेपछि घरको प्रमुख व्यक्तिले आगन्तुकलाई बोलाएर प्रवेश गराउने चलन छ ।
**यात्रामा शुभ शकुनः-** ब्राम्हण,कन्या,भरिएको जलपात्र,दही,माछा, गाई, बाँधेको पशु, फूल, फल, रत्न, बाजा बजेको, सन्तानयुक्त महिला, चराको बोली, वेदमन्त्र, मन्दिरको घण्टनाद आदि ।
**यात्रामा अशुभ शकुनः-** पतिता-सन्तानहीन-विधवा-गर्भीणी-रजस्वला-सुत्केरी महिला,जोगी,हिजडा,विष्टा,तेल,गडेउलो सर्प आदि सरिसृप,गधाको आवाज,खाली वा जुठा भाँडा, विरामी-विकल-नग्न-पागल-कपाल खौरेको मानिस, रित्तो गाग्री वा घडा, बिरालोले बाटो काटेको, कुकुर वा बिरालाको झगडा, उल्टो जुत्ता-चप्पल, भिजेको कपडा, हाच्छ्युँ आएको आदि ।
**वाहनप्रयोग गर्दा मुहूर्त्तः-** स्वा.पुन.श्र.धनि.शत यी नक्षत्रमा सोम शुक्रवार पारी पापपक्ष, भद्रा, आदि अशुभकाल त्यागी वाहन, साइकल, मोटरसाइकल, कार आदि किन्नु बेच्नु वा प्रथम प्रयोग गर्नु शुभ हुन्छ। वाहनको रंग आफ्नो राशि, राशिको स्वामी वा लग्नेशको अनुसार उपयोग गरेमा उचित होला ।
**विशेष-**यात्रा गर्दा अपशकुन देखिएमा पहिला चोटी उभिएर ११ पटक, दोस्रो चोटी १६ पटक प्राणायाम गरी हिंड्ने, तेस्रो चोटी पनि अपशकुन भएमा फर्कने यात्रा नगर्ने । अत्यावश्यक वा पराधिनतामा शकुन र तिथि,नक्षत्र आदि विचार गर्न सम्भव हुँदैन अतः मनमा उत्साह लिएर भगवान्को स्मरण गरी यात्रा गर्नु योग्य छ ।

**मङ्गलं भगवान् विष्णुः मङ्गलं गरुडध्वजः ।**
**मङ्गलं पुण्डरीकाक्षो मङ्गलाय तनो हरिः ॥**